# विषय सूची

# थरगोत्रप्रवरावली

## मंगलाचरण

सिद्धी हुन् जस्कि नारी स्वरूप सगुणकी भूँडि जस्को छ भारी।
अङ्कूशे पाश शोभा दुइतिर करमा उन्दुरूको सवारी ॥
माला छन् वीषधारी जउन प्रभुजिको दण्डवत् शीर भारी।
विघ्नैका मेल टारी लगिदि भवजहाज्बाट यो सिन्धु तारी ॥

## थरका श्लोक

पूर्वीया र कुमाइँ बाहुनहरू जैसी अनी क्षत्रिको।
शाखा सूत्र र गोत्र निर्णय सबै भन्छु म शास्त्रादि जो ॥
गुरुको भेद गुरुङ्को मगरको राई नित्रार्को पनि।
हो हेरनुहोस हे सुजन हो ! जान्ने कुरा हो भनी ॥१॥
क्याल कुमेडि कार्कि कुकुर्याल कुकुरकाटे अनी।
ानि कडालिया कँडरिया काफ्ले कुटौला पनी ॥
कर खेति केशरि कँवर् कादाल् कट्टवाल् कँडेल।
ल्खेती अनि कालिकोठि कमली काश्रे कवारी कटेल ॥२॥
ल्साखी खनियाँ खरेल खकुर्याल् खँड्का खँदाल् खत्री।
गतौला गजुर्याल गौलि खतिवाडा गैरिपीप्ली गरी ॥

गूरागाइँ गिदेल गौनपुरि भो गेवालि गोरान् अनी।
गोतामे अनि गौरिकोटि गुइँगेल् गूवालि भूती पनी ॥३॥
घोडासैनि र घीमिरे र घिचुवा फेरी घटौला त यो।
छालातानि र छानि छत्कुलि अनी छत्कानि छोटेल् भयो ॥
चौलागाइँ र चालिसे र चित्वाल् चन्दीलगाईं त भो।
चापागाइँ र चन्दने चमरिया चम्याल चूडाल भो ॥४॥
चूवागाइँ र चीलिमालि चउसाल् चौलानहेरू भयो।
चौगोडे र चिखाडि चन्दन र चिल्खाडा र चोरेल यो ॥
जीखाडा जनखाडि जोसि जीसिना जंघारखेती अनी।
जैकोटी जलहारि भो जनिचला जुम्ली जुरेली पनि ॥५॥
जल्कोटी जलनी भयो ज्यमकटेल् फेर् जम्बुकोटा भयो।
टूगाण्डेल् ठडराइ फेरि टुनिखाने आदि जान्नू त यो ॥
डुम्रापानि डुडेल फेरि डुमेगाइँ डुमेगाडी त भो।
डल्लाफोरि र डण्डकेल् डियउला डोजेल डाबीबि भो ॥६॥
ढोडारी र ढकाल फेरि ढुँढिकुयाल् ढुँगेल् ढुङ्गाना ढिना।
तेवारी र त्रिताल् त्रिपाठि र तिमल्सेना अनी तिम्सिना ॥
थापथैलो थलहारि भो थपलिया थापा थलाल् कर्कने।
देवीपाङ्गि दनै दराल दुरबल् दोहोरिया दर्शने ॥७॥
दिल्खाडा र दबाडि दैनि तिल[illegible]-टा दासकोटा दयाल्।
दाहाँ देवकुटा दुवाडि र दमाल् दाहाकिटी दैडिवाल् ॥
धौलागाइँ धकाउला धमलि भो धूमीविलासे अनि।
धीताल् भो अनि धर्मकोटि धिनुवा ध्यानी धव्यारी पनि ॥८॥

नीमीदालि निमालि फेरि निधुरेल् निस्वाल् निरौला त यो।
न्यौपान्या न्युहुनेल नन्दमुखि भो नाताल् नहर्की भयो ॥
फुल्बेल्पाति र फेकुरेल फडियाकाफल् र फुँयेल भो।
पुवाली अनि लोफले र फुसरा-फारा पमर् कांट भो ॥९॥
पाँडे पन्त पराजुली परउला पण्डित् पदेरू अनी।
प्याकुर्‍याल र पन्थि पन्थ र पडेल् पाठक् पराई पनी ॥
पूडासैनि र पारिजाइ कहुँला पोख्रेल पौडेल् अनी।
पीडाउत् पग्साइँ पैनलि पियू ठाना पडेनी पनी ॥१०॥
वानीयाँ बखरेल भिट्ट बिमली फेरी बसौला बराल।
बाराकोटि र बस्तकोटि बुरलाकोटी बगाले बडाल ॥
बाँस्तोला बिछुवाल् बिडारि बाउडे बोकेढुँगा बारुले।
बोहोरा बजगाईं फेरि बसिया बत्याल बाल्गोकुले ॥११॥
बाँस्कोटा बलिया बरालि बखरी बाउन्नपूरी अनी।
बूढाथोकि बरासिनी र बजरा बाग्ले र बत्ती पनी ॥
भट्कौला भटराइ भट्ट भूरतेल् भूपाल भीखेडि भो।
भेकुरेल भँडारि भो भुडिफुका भूसाल् भुरुण्डे त भो ॥१२॥
मीनाकोटि र मेहकोटि मरिची माडी महीमार भो।
महट्टा महतारि फेरि मुडुला मामाख्वकेहेरु भो ॥
मज्खाडा मजगाइँ मांझि मुरिभुस् मैतालि मैनालि भो।
मिल्काधोति महत् मटेल मिलकाटोपी मतासैनि भो ॥१३॥
रूपौला रजनी रजेल र रिसाल् रीजाल रीमाल् अनी।
रूपाखेति र रानिटङ्कि र रुचाल रिकानुने रुनली ॥

गंकाहा रसीटा र गाउत रितातोला रुवाली अरू।
रैंक्रा रेग्मि र लाँकुन्याल र अनी लाज्मार् रगिखाइहरू ॥१४॥

लोटौला लुइँटेल लोहनि र लंसाल् लामिछाने भयो।
गौगोरा पटखोल पाखि पचगा दीर्घायु नातालिया॥
साप्कोटा सिगदेल सावरि सुकुल् सत्याल् सुवेदी अरू।
शीवाकोटि सयारि सप्तरि सिमी सोती सिल्त्वालहरू ॥१५॥

सिखाड़ा सिलिया सिद्धाइ सुनुवार् सञ्जाल् सिलामे अनी।
सिद्धाकोटि सिमल्सुवार सिरिषे फेर् सालखुड्ड पनी॥
शेतागाइँ सिटेल भो शिरकटा सेरा सिगौजे यि भो।
सल्लाकोटि र सुन्तवला अनि शिताखाँड़ा सिजापत्ति भो ॥१६॥

होमेगाइँ र हाड़कोरि हटकोटा हस्तिकोटा यहाँ।
हंली औ हलुआइ फेरि हटुवाल् हर्दी हरीया जहाँ॥
आरुदे अधिकारि आफलद'री आफालटोपी अनी।
अर्ज्याले र अचार्ज ओलि अलिनाभट्टै उपाध्या पनी ॥१७॥

जम्मा छन् थर गिन्ति चार सयमा ज्यादा छ केही यहाँ।
पूर्वीया र कुमाइँको थर सबै सम्झन्छु केही यहाँ॥
फेरी ब्राह्मण क्षत्रिका मगरका गुरुङ राईजिका।
निवार्का थरको सबाइहरु जो भन्छु म बिल्कूलका ॥१८॥

❋

# थरको सवाई

सुन सुन पाँच हो ! म केही भन्छु ।
ब्राह्मणका थरको सवाई कहन्छू ॥१॥
पूर्वीया र कुमाईं क्षत्रियको थर ।
गोरखालिहरुले यति कण्ठ गर ॥२॥
थरका कुरामा आफै अघि सर्दा ।
जानि सुनि आफुले तलासी गर्दा ॥३॥
जति जति पाइयो उति सबै मैले ।
तरजुमा गरि दिएँ हेरिलिनू ऐले ॥४॥
साहा राणा कवर पाँडे सत्याल ।
अर्ज्याल भट्टराई अधिकारी खँदाल ॥५॥
अचार्ज सुवेदी बेसराज ढुङ्गेल ।
फड़िया - काफल बसरेल पूँयल ॥६॥
फेकुरेल भेकुरेल कुइँकेल धीताल ।
गजुरेल खकुर्‍याल कुकुरेल त्रिताल ॥७॥
जेगकटेल दण्डकेल ढकाल पँदेल ।
लाँकुरेल लुइँटेल माझी मटेल ॥८॥
आशाखेति कवखेति रूपाखेति सिग्याल ।
कालाखेति सुनाखेति मिल्काधोती पौडेल ॥९॥
भीमखेती जमरखेति करखेति विष्ट ।
फुल्बेल पाति उप्रेती अलिना - भट्ट ॥१०॥

सापकोटा जौकोटा हस्तिकोटा घ्यानी ।
बाँसकोटा दासकोटा दिलकोटा छानी ॥११॥
थौकोटा शिरफट्टा मरहट्टा रीमाल ।
जम्बुकोटा हटकोटा रसेटा रीमाल ॥१२॥
गतौला उपतौला सुनतोला रीसाल ।
रितातोला सितौला कुथौला रूचाल ॥१३॥
हाड़फोरि ऊठौला बानियाँ पोखरेल ।
गलोसेरि बसेल पनेरू डौटेल ॥१४॥
दाहाकिटि हँसौला चालिसे सीटेल ।
ओड़ार्‌खनि बसौला नेपाल खरेल ॥१५॥
दाहिमा चुनौला गुनि ऋषिवन्त ।
छिमोला नुरुला लटौला पन्त ॥१६॥
अङकुशे तुनौला परौला प्याकुऱ्याल ।
रूपौला दम्कौला सुगरेला छोख्याल ॥१७॥
निरौला भण्डारी कहालि मरौला ।
गलापासो झुण्ड्याई मृत्युस्वर्गजाउला ॥१८॥
जनिचला नाताल, त्रिपाठी, काफले ।
बाँस्तोला बतौला, धमौला पाखले ॥१९॥
होमेगाइँ चौलागाइँ चौवगाइँ संजाल ।
चापागाइँ बजगाइँ आपागाइँ लंसाल ॥२०॥
सेरागाइँ मजगाइँ गुरागाइँ दाहाल ।
सेतागाइँ कालागाइँ दुमेगा भूपाल ॥२१॥

धौलागाइं चन्दिगाइं परसाइं गीदेल।
दैनिवाल चिलुवाल नन्दलाल चौरेल ॥२२॥
हुडारी लौडारी गुरिखुरी कटेल।
आइतवारी महतारी सवारी रजेल ॥२३॥
गउनपुरी थलहारी बिठारी मोरी।
जलहारी महन्तरी बाउन्न-पूरी ॥२४॥
सम्री कबारी सयारी भट्टुवाल।
केशरी बखरी धड्यारी हट्टवाल ॥२५॥
घोड़ासैनी पुड़ासैनीमोरासैनी पैन्ली।
कुवाथानी बरासिनी मैदानी कम्ली ॥२६॥
लोहनी जलनी रजनी गुइंगेल।
रुनूगनी बजारा ठाड़ाराई डुडेल ॥२७॥
पराजुली चिलिमाली गैईरीपिपली।
निमिदाली निमादी बराली थुवाली ॥२८॥
गेवाली जुरेली खम्रि बस्नेत्।
मनाली रोमाली विमली महत् ॥२९॥
ढल्लाकोटि सल्लाकोटि बस्ताकोटि चोलान्।
धर्मकोटि जलकोटि गौरिकोटि गोरान् ॥३०॥
सिमाकोटि भिनाकोटि बुर्लाकोटि गौली।
डुंसाकोटि बराकोटि सिद्धकोटि जुम्ली ॥३१॥
कालिकोटि मेहकोटि दीर्घायु डाँगी।
बोकेढुंगा सिमलखुवा बंहकीमाँगी ॥३२॥

रङ्गिखाड़ा सिंखाड़ा दंखाड़ा गाँड़ा।
दिलखाड़ा मजखाड़ा जिंखाड़ा माँड़ा॥३३॥
उत्तखाँड़ा खतिवड़ा सीताखण्डा मुल्याल।
चिल्लाखाड़ा डुम्रीखाने रिक्तानुने निस्वाल॥३४॥
पारिजाइ कहुला कोईराला भाजी।
मिल्काटोपी रेग्मी छालातानि माझी॥३५॥
मुँडिफूका पाठक थापथैलो थापा।
थपलिया लामिछाने प्रत्यछाने झाँपा॥३६॥
तिघल्सेना तिमीना डुगाना जानी।
दूवाडी र दवाडी गवाढी कैनी॥३७॥
कवर्खेडि भिमखेडि कुभेडी वर्त्याल।
जनखाडी गोदाखाडि वाग्ले वष्याल॥३८॥
नातालिया दोहरिया वलिया गूनी।
कडरिया सिलिया फणिला चूनी॥३९॥
चम्करिया चमरिया दरिया दमाल।
आरुले घिमिरे वारुले दराल॥४०॥
चौगोडे भुसुण्डे भुरुण्डे निधुरेल।
न्यौपाने चन्दने कमली ढिकुरेल॥४१॥
भकुण्डे र भन्दने वालगोकुले।
दर्शने भवने सिरीषे सिरौंले॥४२॥
विचुवा वुढ़ाथोकि गोतामे दुर्वल।
सस्तै-पाखी पश्चिमे खाजल॥४३॥

कुकुर्काटे रोकाहा बोहोरा हमली ।
बासतिखान् चिखासि तरतर घमली ॥४४॥
गहुँगोरा कार्की सुनुवार रैला ।
आगल्दरो सावरी सीमी धारा ॥४५॥
रानीपंखी देवीपंखि कढालिया कथोल ।
अनि धुयिविलासे हर्दिवाला बसेल ॥४६॥
हलुआइ पछाँई सिंढाई पिंढाउत् ।
छलकानि मैनाली दैरि राउत् ॥४७॥
चरिकण्ठे दीर्घायू मौढ़ाहा बराल ।
नन्दमुखि महिमार देलकाडी बड़ाल ॥४८॥
मुरिभुस खडका तेवारी जीसी ।
गौलिया बगाले चम्याल सोती ॥४९॥
डुम्रापानी खाल्साखी उपाध्ये बस्ती ।
छत्कुलि यमलगाटे ओलीभिरा हस्ती ॥५०॥
फुस्राफारा पटखोला अकौलिया चूदाल ।
भटकौला घिनुवा खनिया भूसाल ॥५१॥
चौसाल दनै थलाल राउल ।
घटौला पन्त पन्थी स्रकुल ॥५२॥
सालखुट्टे घसोई मटभरी सेरा ।
पञ्चगाम समुदासे सिलामे फेरा ॥५३॥
बाउन्ने मरिची बसिया बिछुवाल ।
दाविली बाजामुख् पण्डित सिलवाल ॥५४॥

सिरिषे अगस्ती जिसिनो कण्ठ।
सिद्धउठि लाजामार पिउठाना हट्ट ॥५५॥
बाहुनको थर्ती थर काहिं पाइएन।
घत्रि देखिन्छन् तर यहाँ लेखिएन ॥५६॥
चार सय पूरा थर कहियो।
सातु सातु थरको ग्रन्थ गरियो ॥५७॥

## थरका भेद

| | | | |
|---|---|---|---|
| अकौलिया | ओलीभिरा | करखेती | कालखेती |
| अगस्ति | उठौला | कर्कने | कालागाउँ |
| अचार्ज | उत्तरखाडा | कवर | कालीकोटी |
| अधिकारी | उपरतोला | कवरखेडी | कुइँकेल |
| अर्जेल | उपाध्या | कवारी | कुकुरेल |
| अलिनाभट्ट | उप्रेती | कहारी | कुकुरकाटे |
| अंकुशे | ऋषिवन्त | कहुला | कुटौला |
| आइतचारी | ओडारखनी | कँडरिया | कुथौला |
| आगल्दरो | ओली | कँडेल | कुभेडी |
| आपागाउँ | ओस्ती | कँवर | कुवाथानो |
| आफ्कखोपी | कट्टुवाल | कँवरखेती | केशरी |
| आफलदारी | कटेल | कादाल | कैनी |
| आल्दे | कडारिया | काफ्ले | कोइराला |
| आल्ले | कण्ठ | काफ्ले | खकुरेल |
| माशखेती | कमली | कार्की | खलुन्या |

| | | | |
|---|---|---|---|
| खनिया | गोदार | चुडाल | जिमखाडा |
| खतिवडा | गोरान | चुनौला | जिसी |
| खम्री | गौदागाडी | चुवागाई | जिसीना |
| खप्परी | गौनपुरी | चूनी | जुम्री |
| खरखेती | गौराकोटी | चौलान | जुरेली |
| खरेल | गौलिया | चोरेल | जोकोटी |
| खँड्का | गोली | चोगोडे | जौशी |
| खँदाल | घटौला | चौलागाईं | जौकोटा |
| खाजल | घिचुआ | चौलान | झाँपा |
| खोलसाखो | घिमिरे | चौवगाईं | झुण्डघाई |
| गजुरेल | घोडासैनी | चौसाल | टडराई |
| गतौला | चन्दन | छतकामी | टुगाण्डेल |
| गलापासो | चन्दने | छतकुली | टुनिखाने |
| गलासेरी | चन्दीगाईं | छलकानी | ठाडाराई |
| गवाढी | चन्दीलगाईं | छानी | डण्डकेल |
| गहुँगोरा | चमकरिया | छालातानी | डम्राकोटी |
| गाँडा | चमरिया | छिमौला | डाटेल |
| गिद्देल | चम्याल | छोटेल | डाखिबी |
| गुइँगेल | चरिकण्ठे | जनखाडी | डाँगी |
| गुती | चापागाईं | जनिचला | डुगाना |
| गुनी | चालीसे | जमरकटेल | डुडेल |
| गुरागाईं | चिखासी | जमरखेती | डुमेगाईं |
| गुरीमुरी | चिरवाडी | जम्बूकोटी | डुमेगाडी |
| गुवाली | चिरुवाल | जलकोटी | डुम्राकोटी |
| गेवाली | चिलखाडा | जलनी | डुम्रापानी |
| गैरीपीपली | चिलीमाली | जलहारी | डुम्रीखाने |
| गोताने | चिलुवाल | जँधारखेती | डोजेल |
| गोतामे | चिम्राखाडा | जानी | ढकाल |

ढब्लाकोटी
ढिकुरेल
ढिना
ढुंगाना
ढुंगेल
ढुँटिकुयाल
ढोडारी
तरतर
तिघलसेना
तिमलसिना
तिमसिना
तिमिना
तिलकोटा
तिवारी
तुनौला
त्रिताल
त्रिपाठी
थपलिया
थलहारी
थलाल
थापथैलो
थापा
दण्डकेल
दनै
दमकौला
दमखाडा
दमाल
दयाल

दराल
दरिया
दर्शने
दवाडी
दाविली
दासकोटा
दाहाल
दाही
दाह्लाकिटी
दाह्लीमा
दिलकोटा
दिलखाडा
दीर्घायु
दुभेगा
दुर्चल
दुवाडी
देलकाडी
देवकोटा
देवीपंखी
दैडांवाल
दैनी
दैनोवाल
दैरी
दोहरिया
धकौला
धकेरी
धमली
धमौला

धर्मकोटी
धिनुवा
धीताल
धुथिविलासे
धूमीविलासे
धौलागाईं
ध्यानी
नताला
नन्दधुखी
नन्दलाल
नहरकी
नाताल
नातालिया
निधुरेल
निमदी
निमाली
निमिदाली
निरौला
निसवाल
निहुनेल
नुरुला
नेपाल
न्यौपाने
पगेनी
पत्रगा
पछाईं
पटखोल
पडेल

पण्डित
पनेरु
पन्चगाम
पन्त
पन्थ
पन्थी
परसाईं
पराजुली
परौला
पश्चिमे
पसोई
पाखी
पाठक
पारा
पारिजाई
पाँडे
पिडाउत
पियू
पुडासैनी
पैनली
पोखरेल
पौडेल
प्याकुरेल
प्यूठाना
प्रत्यछाने
फडियाकाफल
फणिला
फारा

| | | | |
|---|---|---|---|
| फुयेल | बाउँडे | भवने | महतारी |
| फुस्रा | बाग्ले | भँडारी | महन्तरी |
| फुस्राकारा | बाडतिखान | भाजी | महीमार |
| फूलवेलपाती | बाजामुख | भिनाकोटी | माझी |
| फेकुरेल | बानिया | भीखेडी | माडी |
| बखरी | बारुले | भीमखेडी | मामाथके |
| बखरेल | बालगोकुले | भीमखेती | माँडा |
| बगाले | बाँस्कोटा | भीराहस्ती | मिल्काटोपी |
| बजगाईं | बाँस्तोला | भुडिफुका | मिल्काधोती |
| बजारा | बिचुवा | भुएडाई | मीनाकोटी |
| बजी | बिछुवाल | भुकएडे | मुडुला |
| बडाल | बिठारी | भुरतेल | मुरीभूस |
| बराकोटी | बिडारी | भुरुएडे | मृत्युस्वर्गजाउला |
| बराल | बिमली | भुसुएडे | मेहकोटी |
| बराली | बिस्ट | भूपाल | मैताली |
| बरासिनी | बुरलाकोटी | भूसाल | मैदानी |
| बतौला | बूढाथोकी | भेकुरेल | मैनानी |
| बर्त्याल | बेसराज | मजखाडा | मैनाली |
| बर्स्याल | बोकटी | मजगाईं | मोरासानी |
| बलिया | बोकेदुंगा | मटभरी | मोरी |
| बसिया | बोहोरा | मटेल | मौढाहा |
| बसेल | बौडाहा | मतासैनी | यमलगाटे |
| बसौला | भकुएडे | मनाली | याखले |
| बस्ताकोटी | भटकौला | मरहट्टा | युघाली |
| बस्नेत | भटराई | मरासिनी | रंगिखाई |
| [illegible]हकीमाँगी | भट्ठवाल | मरिची | रजनी |
| बाउन्नपुरी | भट्ट | मरौला | रजेल |
| बाउन्ने | भन्दने | महत | रसीटा |

| | | | |
|---|---|---|---|
| रंगोखाडा | लक्काई | सिटेल | सेढाई |
| राउत | लटौला | सिताखाँडी | सेतागाई |
| राउल | लम्साल | सितौला | सेरा |
| राणा | लाकुरेल | सिद्धउठी | सेरागाई |
| रानीटंखी | लाजमार | सिद्धाकोटी | सोणारी |
| रानीपंखी | लामिछाने | सिमखाडा | सोती |
| रावल | लुइँटेल | सिमलमुवार | संजाल |
| रिक्कानुने | लोहनी | सिमी | हटकोटा |
| रितातोला | लौडारी | सिरकटा | हडुवाल |
| रिसाल | सत्याल | सिरफटा | हड्ड |
| रीजाल | ससरी | सिरीषे | हमली |
| रीमाल | समुदासे | सिरौजे | हलुवाई |
| रुचाल | सयारी | सिरौले | हरिया |
| रुनुगनी | सल्लाकोटी | सिलवाल | हर्दी |
| रुवाली | सवारी | सिलामे | हर्दीवाला |
| रूननो | सस्तैपाखी | सिलिया | हस्तिकोटा |
| रूपाखेती | सापकोटा | सिवाकोटी | हस्ती |
| रूपोला | सालखुट्टे | सुकुल | हँसौला |
| रेग्मी | सावरी | सुगरेल | हाडाफोरी |
| रैछा | साहा | सुनाखेती | हुडारी |
| रैला | साही | सुनुवार | होमेगाई |
| रोकाहा | सिग्देल | सुन्तोला | ज्ञवाली |
| रोपाली | सिजापति | सवेदी | |

| थरको | किसिम (प्रकार) | गोत्र |
|---|---|---|
| अधिकारी– | १ भँडारे | काश्यप |
| | २ खिलचिने | काश्यप |
| | ३ कौवाली | काश्यप |
| | ४ थामी | भारद्वाज |
| | ५ ठाड़ाराई | अत्रि |
| अर्जेल– | १ बिहारे | आत्रेय |
| | २ बगाले | आत्रेय |
| जोशी— | १ झिजार | गर्ग |
| | २ लटौला | भारद्वाज |
| | ३ सिलाइं | आङ्गिरस |
| खदाल– | १ खोरिया | घृतकौशिक |
| | २ गैहा | घृतकौशिक |
| पाँडे– | १ सिमलदिया | कश्यप |
| | २ कुलेटा | भारद्वाज |
| | ३ बड़खोरा | काश्यप |
| पोखरेल– | १ पानी | आत्रेय |
| | २ दूध | भारद्वाज |
| पौडेल– | १ काला | आत्रेय |
| | २ गोरा | ,, |
| भँडारी– | १ निरौला (सुन्ताखाने) | भारद्वाज |

| | | |
|---|---|---|
| | २ रघुवंशी | कौशिक |
| | ३ सिजापति (थानसिङे) | वशिष्ठ |
| सुवेदी– | १ नयाँघरे (दहचोके) | भारद्वाज |
| | २ लामूपाखे (केवलपुरे) | भारद्वाज |
| भट्ट– | १ अलिना | विश्वामित्र |
| | २ दुवाडी | विश्वामित्र |
| | ३ दूवाल | उपमन्यु |
| | ४ निरवंशी | विश्वामित्र |
| | ५ रयाल | विश्वामित्र |
| | ६ राई | विश्वामित्र |
| | ७ लामिछाने | गर्ग |
| कार्की– | १ खुलाल | मौद्गल्य |
| | २ झुडुला | मौद्गल्य |
| | ३ लामा | मौद्गल्य |
| | ४ सुतार | घृतकौशिक |
| खड्का– | १ कमलकोठे | कौडिन्य |
| | २ खँड्का | भारद्वाज |
| | ३ खपतरी | कौशिक |
| | ४ पालपाली | गर्ग |
| | ५ लकाईं | भारद्वाज |
| थापा– | १ कालिकोटे | मौद्गल्य |
| | २ खुलाल | आत्रेय |

| | | |
|---|---|---|
| | ३ गाम्ले | कौडिन्य |
| | ४ गोदार | काश्यप |
| | ५ पुवार | आत्रेय |
| | ६ बगाले | ,, |
| | ७ लामिछाने | गर्ग |
| | ८ सुथल | वशिष्ठ |
| वस्नेत– | १ खपतरी | कौशिक |
| | २ खुलाल | धनञ्जय |
| | ३ सेरपाली | भारद्वाज |
| बूढाथोकी– | १ खपतरी | कौशिक |
| | २ खुलाल | धनञ्जय |
| | ३ सोडारी | काश्यप |
| माझी– | १ माझी | कौशिक |
| | २ रायमाझी | काश्यप |
| विष्ट– | १ कमलकोटे | कृष्णाञ्जनि |
| | २ खपतरी | कौशिक |
| | ३ पुवार | कपिल |
| | ४ सिजापति | भारद्वाज |
| | अन्य केही थर | गोत्र |
| | काफ्ले | शाण्डिल्य |
| | ढुंगाना | कौशिक |
| | ढुंगेल | अगस्ति |

| | |
|---|---|
| त्रिपाठी (सामवेदी) | गौतम |
| पन्थी, बजाईं | माण्डव्य |
| मरहट्टा | पाराशर |
| मुडभरी | वशिष्ठ |
| रेग्मी | कौशिक |
| झवाली | माण्डव्य |

गहतमा कसैको शाण्डिल्य र कसैको कृष्णाञ्जनि गोत्र हुन्छ।

दुवैमा हुने केही थर—पूर्विया र कुमाईं

| | |
|---|---|
| चम्याल | बराल |
| छतकुली | भट्ट |
| पदेरु | रेग्मी |
| पन्थ | |

कुमाईं काँचा र पाका दुइथरि हुन्छन्। यी दुइको बिहाबारी, भात-भान्सा मिल्दैन।

## ठकुरी

| | | |
|---|---|---|
| १ खान | ४ मल्ल | ७ शाहा |
| २ चन | ५ राया | ८ शाही |
| ३ ज्यू | ६ शाह | ९ सिंह |

शाही—१ मेधासी र २ कसकेली

यिनमा अत्रि र आत्रेय दुवै गोत्र हुन्छ। मुख्यतः यिनको काश्यप गोत्र हो।

हमाल—१ कालीकोट, २ गोरे

# सगोत्री र प्रवर

अगस्ति गोत्र—ढुंगेल ।

प्रवर—अगस्तिः, जैमिनिः, दधीचिश्चेति त्रिप्रवरः ।

## अत्रिका सगोत्री

चापागाईं र बस्ति मिश्र खतिवाडा मल्ल ओझा अनी ।
ठाराराइ अधिकारीको र अनि गोतामेहरूको पनी ॥
अत्रीगोत्र यि आठको प्रवर तिन् शाखा उही यीनको ।
यिन्मा हुन्छ बिहेबरी बुझनु भो अत्री र आत्रेयको ॥

प्रवर—अत्रिः अर्चनानसः श्यवाश्वश्चेति त्रिवरः ।

अत्रिका छोरा आत्रेय भन्ने अर्थ भएमा अत्रि र आत्रेयको बिहेबारी हुँदैन । ती अर्का अत्रि हुन् भनेका पक्षमा विवाह गर्नहुन्छ ।

## आत्रेयका सगोत्री

दूवाडी र दुलाल पौडेल र थापा कालिकोटे अनी ।
थापा फेरि पुवार चाहिं र खुलाल् थापा बगाले पनि ॥
पानीपोखरेल कालिकोटि खडका अज्याॅल सिक्देल् अरू ।
यी एघार सगोत्रि त्रि प्रवर हुन् आत्रेय गोत्रीहरू ॥

प्रवर—आत्रेयोऽर्चनानसः श्यावाश्वश्चेति त्रिप्रवरः ।

## उपमन्युका सगोत्री

मैनाली र दुवाल भट्ट र ढकाल दैनी यि चार्कों अनी ।
गोत्रै हो उपमन्यु त्रिप्रवर हो जानी लिनू यो पनी ॥

प्रवर—उपमन्युः, कपिलः, चिरुजश्चेति त्रिप्रवरः ।

## काश्यपगोत्रका सगोत्री

साहा साहि ठकुरि माझी घिमिरे गोदार थापादिको ।
गर्तौंला अधिकारी बोकटि र सोणारी बुढाथोकिको ॥
यिन्को काश्यप गोत्र त्रि प्रवर हो पाँड़े बडाल्को पनी ।
हो कात्यायन सूत्र वेद उप ता जान्नू धनुर्वेद् भनी ॥
माध्यन्दीनिय हो भनेर मनमा शाखा पनी गूनन् ।
हाम्रो शुक्ल यजूरवेद शिवजी हुन् देवता बूझनू ॥
हो दाहीन शिखा र पाद, थरको पत्ता नहूँदा अनी ।
जान्नू काश्यप गोत्र फेरि पशुको पक्षीहरूको पनी ॥
प्रवरः—काश्यपावत्सारनैध्रुवश्चेति त्रिप्रवरः ।

## कौडिन्यका सगोत्री

प्याकूर्‍याल अचार्जको र अनि साप्कोटा र सत्यालको ।
मोरासानि पराजुली र अनि बास्कोटा र त्रीतालको ॥
न्यौपानेहरुको लकाँयि खँडका गाम्ले र थापा अनी ।
बाहोटा यि पंदेरु लीइ बुझनू यी हुन् सगोत्री भनी ॥
प्रवर—कौडिन्यो, वसिष्ठो, मैत्रावरुणश्चेति त्रिप्रवरः ।

## कौशिकका सगोत्री

रेग्मी खसरी विष्ट सप्तरि बुढाथोकी बिणारी रिमाल ।
लाम्छानेखँडका अनी खपतिखँड्का ढुंगाना चित्ताल ॥
तिवारी अनि माझि ली खपतरीबस्नेत् लुहँटेल अनी ।
सूडासानि र बानियाँ र रघुवंशी ओ भँडारे पनी ॥
बस्ताकोटि सगोत्र कौशिक प्रवर तीनै जम्मा सोहभा ।
प्रवर—कौशिकः, अघमर्षणः, विश्वामित्रश्चेति त्रिप्रवरः ।
वा-कौशिकः देवरातः औदलश्चेति त्रिप्रवरः ।

## गर्गका सगोत्री

बाँस्तोला गजुरेल, भट्ट र रिसाल जो लामिछाने अनि ।
भुर्तेल् चाहिं अचार्जको र अनि लांछाने त थापा पनी ॥
रोकाहा र चुँड़ालको र भुरतेल् हुन् गर्ग गोत्री यति ।
कन्यादान सगोत्रिमा नगरनू घोर्पाप लाग्ला अति ॥

प्रवर–गर्गः, गार्ग्यः, गौतमः, विश्वामित्रः पाराशर्यश्चेतिपञ्चप्रवरः ।

## घृतकौशिकका सगोत्री

सुतार्कार्कि बराल पण्डित खदाल् नेपाल यी पाँचको ।
घृत्कौशिक् यहि गोत्र हो प्रवर ता दूई छ लेखीयको ॥

वर—घृतकौशिकः, विश्वामित्रश्चेति द्विप्रवरः ।

पाराशर—मरहट्टा ।

प्रवर—पाराशरः, वशिष्ठः, शाक्यश्चेति त्रिप्रवरः ।

## धनञ्जयका सगोत्री

होमेगाइं रिजाल् पडेनि र बसेल् कुकूरकाटेजिको ।
गूरागाइं खुलालबस्न्यत भुसाल् खूलाल् बुढाथोकिको ॥
गैरीपीप्लि दशै धनञ्जय बुझ्नु गोत्रै घमाला पनी ।

प्रवर—धनञ्जयः, विश्वामित्रः, मधुच्छन्दश्चेति त्रिप्रवरः ।

## भारद्वाजका सगोत्री

चौलागाञि सुवेदि पन्थि सिलुवाल सीजापती विष्ट भो ।
वाग्ले लोहनि पन्त थामिअधिकारी दूधपोखेल भो ॥
शीवाकोटि देवकूट निरउला चाहीं भड़ारी अनी ।
बोहोरा खड़का र राउल कथेल सेर्पालि बस्नेत् पनी ॥

पाँडे जो कुलटा समेत बिस छन् जोसी लटौला लिई ।
भारद्वाज सगोत्र त्रिप्रवर हो अन्यत्र थाहा दिई ॥

प्रवर—भारद्वाज, आङ्गिरसो, बार्हस्पत्यश्चेति त्रिप्रवरः ।

माण्डव्य—वजगाईं, शवाली ।

प्रवर—माण्डु, माण्डुव्य, विश्वामित्रश्चेति त्रिप्रवरः ।

## मौद्गल्यका सगोत्री

कैराला कुश्किेल फेरि मुड्ला कार्की र उप्रेतिको ।
सींखाड़ा अनि तिम्सिना बुझ तिमल्सेना र बैल्काणिको ॥
यी जो आठ सगोत्रि हुन् प्रवर तिन् मौद्गल्य हो गोत्रता ।

प्रवर—मौद्गल्यः, आङ्गिरसो, भार्म्यश्वश्चेति त्रिप्रवरः ।

## वत्सका सगोत्री

राणाको लमसालको कवरको दाहाल रुपाखेतिको ।
घौता शंकर वत्सगोत्र प्रवरै पाँचै छ है येतिको ॥

प्रवर-वत्सः, और्वः, च्यवनः, भार्गवः, जामदग्न्यश्चेति पञ्च प्रवर

## वसिष्ठका सगोत्री

खूयल राउत भट्टराइ र सुयेल, थापा दवाड़ी अनी ।
थान्सीडे त भँड़ारिको अनि सुयल् घर्ती खरेल्को पनी ॥
चालीसेहरु आठ् सगोत्रि प्रवरै हो तीन जान्नू अनी ।

प्रवर—वसिष्ठ, इन्द्रप्रमद, आभरद्वसुश्चेति त्रिप्रवरः ।

शाण्डिल्य—काफ्ले ।

# थरको उत्पत्ति

हरिद्वारदेखि पूर्व अलमोड़ादेखि पश्चिम बीचमा पौड़ी भन्ने गाउँ छ। त्यस पौड़ीमा बसी विचित्र चालले नदीमा पौड़ी खेल्दा देख्नेले 'क्यासित पौड़े ल' भन्दा 'पौड़ेल' थर भएको हो। त्यसै पौड़ी गाउँबाट केही कालमा पूर्व-नेपाल सरहदमा गुल्मी मध्ये सिक्दी गाउँमा बसी पण्डितसित पढ़दा पण्डितजीले सबै शास्त्र सिकाइदेउ भन्दा 'लौ' भनी सम्पूर्ण शास्त्र सिकेको हुनाले सिकदेल थर भएको हो। सिकदेलहरूमा ठूला-ठूला पण्डित भइआएको कारण पनि गुरु-भक्तिले नै हो। कोही पौड़ी भन्ने गाउँबाट पौडेल नेपाल सरहदको मुसिकोट जिल्लाका अरज्यै गाउँमा बसेका हुनाले अर्ज्याल थर भएका हुन्। पं० पु० सु० वीरेन्द्रकेसरी अरज्याल थोलु अरज्यालका सन्तान बगाले अरज्याल हुन्। पं० पु० उमानाथ अरज्याल मदनका सन्तान बिहारे अर्ज्याल हुन्। यी दुवैको आत्रेय गोत्र हो। मुसीकोट जिल्ला मध्ये घमीर गाउँ छ, त्यहाँ बसेका हुनाले घमीरे थर भएको ह ; पछि घमिरेबाट घिमिरे भएका हुन्। जाजरकोट जिल्लामा गोताम गाउँ छ, त्यहीं बसी आएका हुनाले गोतामे थर भएको हो। जुमला ठाँटखर्क रूईडाँडामा बसेका हुनाले रीमाल भनेका हुन्। त्यसै गाउँमा फैडाडामा बस्ने भनी फुयाँल भनेका हुन्। यी दुवैको जूठ पिण्डी लाग्छ। दुवैथरीको कौशिक गोत्र हो। पाल्पानेर ज्ञवा गाउँमा बसी यज्ञ गर्दा छोरा बालक हुँदा बाबालाई 'यज्ञबाला' र आमालाई 'यज्ञवाली' भन्दारहेछन् ; पछि यज्ञवाला मरेछन्, त्यसपछि यज्ञवाली पनि मर्दा यज्ञको 'य'लाईभिन्न राखी छोरालाई यज्ञवाली भनी स्त्रीलिङ्गबाट पुल्लिङ्ग गरी भन्दा 'ज्ञवाली' थर भएको हो। गानशास्त्रमा धीमा ताल दिन सिपालु हुँदा धीताल भनेका हुन्। बाबाले थाहा नपाउने गरी छोरो वेन माने वीणा

बजाउन सिक्तो रहेछ। एक दिन बाबाले थाहा पाई तँलाई बदमाश नपढेर वीणा बजाउने भनी बराबर वीणा फोर्न जस्का गर्दा वीणाको शत्रु (अरि) हुँदा वीणारि थर भएको हो। भट्टरा गाउँमा बसी भट्टले झैं गरी वेद पढी ठूला काम गरेका हुनाले 'राय' पदवी पाई भट्टराय भई पछि भट्टराई भएका हुन् भन्दछन्। कोहीं भट्टका झैं गरी वेद पढी पूर्व राई गाउँमा बसेका हुनाले भट्टराई थर भएको हो। यी चार पुरेतमा एक हुन्। भट्टराईलाई वेद बहुतै आउँछ। सुण्ठु-वेदी सुवेदी बढिया तरहले वेद आउने भनी सुवेदी भनेका हुन्। दुइ भाईमा एक भाईले लामु पाखो गरी घर बनाउँदा लामुपाखे भए। एक भाइले नयाँ चालको घर बनाउँदा नयाँ घरे भए। यी दुवैको भारद्वाज गोत्र हो। कुकुरलाई छोयो भने सचैल स्नान गर्नु, खाँदा खेरी देख्यो भने प्रायश्चित्त गर्नु पर्नें हुनाले सत्पात्र विद्वान् ब्राह्मणले विहान कुकुर आएको देखी लखार्दा देख्नेले 'कुइँ-कुइँ पारी क्यासित लखारे' भन्दा कुइँक्याल थर भएको हो कि भने झैं लाग्छ। यसै गरी सम्पूर्ण थरको व्याख्यान गर्दा ग्रन्थ धेरै हुनजान्छ।

## पूर्विया ब्राह्मणहरूको प्रादुर्भाव

चन्द्रमा र सूर्य जुन दिशाबाट उदाउँछन् त्यही पूर्व दिशाबाट गोरखाली ब्राह्मणको पनि उदय भएको हुनाले पूर्विया ब्राह्मण भनेको हो भन्ने मतको समेत कानपुर ( कन्नौज ) कान्यकुब्ज देश पश्चिमतिरबाट आएका हुन् भन्नाले विरोध पर्ने भयो, अथवा पूर्व कालदेखि नै हाम्रा पुरुषा यहीं बसेका हुन् भन्ने मतमा पनि बित्यास पर्ने भयो, पूर्विया ब्राह्मणको अर्थ के गर्ने हो ? तसर्थ यो कुरा के हो भने पञ्चमस्कन्ध भागवतादि पुराणहरूबाट ब्रह्माले सृष्टि गरेको उत्तराखण्डबाट ठहर्छ। बड़ा-बड़ा ऋषि-मुनिहरू तपस्या गरी हिमालयमा बसेका देखिन्छन्। ठूला-ठूला मरुतादि राजाहरूले यज्ञ गरेको पनि हिमालयमा देखिन्छ। उत्तराखण्ड हिमालयको हावा बहुतै पवित्र, भूमि अति शुद्ध जानी ननुहाई मुख हस्तपादादि मात्र

धोई उहींनेर मलमूत्रादि गरी ईश्वरमा ध्यान दिएर बसेका धौम्य ऋषिलाई निम्ता दिई पाण्डवादिले यज्ञका निमित्त हिमालयबाट नै लगेको देखिन्छ अर्थात् बाहुनको थातथलो उत्तरा-खण्ड देखिन्छ। सृष्टिको पूर्वकालदेखि नै उहीं बसेका हुनाले हामीलाई पूर्बिया भनेको हो। कान्यकुब्ज भनेको अर्थ-अन्तरवेदीका ब्राह्मणलाई कान्यकुब्ज भन्नू भन्ने लेख पाइन्छ, जस्तै गङ्गा र यमुनाका बीचको भूमिलाई अन्तरवेदी भन्दछन्। कृष्णगण्डकी र सेतीको बीच पनि अन्तरवेदी कहलाउँछ। फेरि पूर्व मेची र पश्चिम महाकालीसम्ममा हाम्रो एकै बोली छ तसर्थ अन्तरवेदीमा परेका हुनाले र यहाँदेखि यहाँसम्मका हाता भित्रलाई कान्यकुब्ज देश भन्नू भन्ने ग्रन्थान्तरमा लेखिएका हाता भित्र परेका हुनाले हामीलाई कान्यकुब्ज भनेको हो अथवा 'सर्वे द्विजाः कान्यकुब्जा उत्कलं माथुरं विना'† भन्ने यो श्लोकको भावार्थ मथुरा र उडीसाका ब्राह्मणबाहेक सबै ब्राह्मणलाई कान्यकुब्ज भन्नू भन्ने यस प्रमाणले पनि हामी सबै कान्यकुब्ज भएका हौं। कान्यकुब्जबाट आएका भनी कान्यकुब्ज भनेको होइन अथवा सेती र कालीका बीच अन्तरवेदीतिरबाट आएका हुन भन्नलाई होइजाओस्, कानपुरतिरबाट आएका हुन् भन्ने कुरा कसो गरी हुन् भन्नू! यस जम्बूद्वीपको उत्तरतिर सुमेरु पर्वत, सुमेरुका ४ दिशा ४ पर्वत र वरिपरि २९ पर्वतादि सृष्टि गरे भनी लेखेको हुनाले सप्तऋषि आदि अनेक ऋषिहरू नेपालादि हिमालय पर्वतका एक देशैमा सृष्टि भए। यी सृष्टि भएका अनेक ऋषिहरूले तपस्या गरी तपस्याका फलले झन् ठूला भै मरुत आदि राजाहरूको यज्ञ-यागादि गराई बसेका ऋषिहरूका सन्तानहरूले उत्तराखण्डैमा घुमी नेपाल गई-ओ हो! गुह्येश्वरी आदि देवीहरूले र पशुपतिनाथ आदिका शिवलिङ्गहरूले शोभायमान भएको, फेरि हिमालयपर्वतका हावाले तथा वाग्मती आदि गङ्गाका हावाले पवित्र भएको यस्तो

† 'मागधं माथुरं विना' यसो पनि भन्दछन्।

पशुपतिनाथको कैलाशरूपी पुण्यभूमि नेपालमा बस्नाले हाम्रो स्नान सन्ध्योपासनादि कर्म तपस्या गर्न बहुतै सुविस्ता हुने रहेछ भनी बसेका हुन्, कान्यकुब्जादिबाट आएका होइनन्। यसमा विचार गर्नुहोस्—फेरि पुराणादिले र तन्त्र-शास्त्रादिहरूले वर्णन गरी पुकारा गरिएको, देवताहरूले यो नेपाल परम पीठ छ भनी बराबर भुराएको, फेरि ज्योतिषादिले पनि नेपाललाई खस-देश भनेको र नेपालमा प्रायः खस ( छेत्री ) हरू धेरै देखिदा छेत्री बसेका ठाउँमा ब्राह्मण नभै नहुने हुनाले र पूर्विया ब्राह्मणको र क्षत्रियहरूको भाषा पनि एक भएको देखिनाले र परम्परादेखि भाम्से पनि पूर्विया ‌ः आएका, पद्धति पनि पूर्वियाकै छ; तसर्थ सृष्टिदेखि नै यसैको नेपाल ठहर्छ। फेरि ठुला सिद्ध योगी मच्छेन्द्रनाथ, मीननाथ, गोरखनाथ आदिले खातिर गरिएको भनी 'गोरखा' नाम रहेको। अगाडिदेखि नै क्षत्रियको स्वच्छन्द राज भएको यस्ता गोरखामा बस्ने हामी कान्यकुब्जबाट आएका हौं, नेपालका बाहुन त अघिका गोभाजू हुन्। हाम्रो मातृभाषा पनि कानपुरतिरको पक्की बोली हो भन्न म ता सक्तिनँ। कास्की पोखरा आदि गोरखातिर बाइसे चौबीसे राजाहरू शुद्ध क्षत्रिय हुन्। नेपाल खाल्डाका अघिका पाटन, काठमाण्डू, भादगाउँ आदिका राजाहरू पनि मल्ल क्षत्रिय हुन्; नेवारे राजा होइनन्। गोभाजूमा पनि गतौंला आदि थर भएका प्राचीन शहर भित्र बसी नेवारहरू-का पुरोहितादि कर्म गर्दा नेवार जस्ता देखिएका हुन्। शहर बाहिर यता-उता काँठा-काँठीतिर क्षत्री-बाहुन कोही थिएनन्, नेवार मात्र थिए। भन् अघि किराती मात्र थिए, छेत्री-बाहुन यौटा पनि थिएनन् भन्नु गल्ती हो, धेरै किरातीहरू रहेछन्, थोरै छेत्री-बाहुन आदि रहेछन् यति मानिन्छ; किनकि हिमवत्खण्डादिमा चौंसठी लिङ्ग-यात्राका महात्म्यमा ब्राह्मणले यसरी तपस्या गरे, यस्तो वर पाए भनेमा कुन चाहिं देशी बाहुन आई तपस्या गर्‍यो ? नेपालकै बाहुन-ले तपस्या गरे, नेपालैका किरातीले जाग्रिस्मादि तपस्या गरी पूजा

गरे। कोही थोरै बुद्धि भएका महाशयहरू औरंगजेब बादशाहका डरले यज्ञोपवीत (जनै) जोगाउनका निम्ति (कन्नौज शहर) कान्यकुब्जबाट भागी नेपाल तर्फ जाँदा नयाँ पानीमा बसे भनेर 'नयाँ पानी' थर भयो। यसैको अपभ्रंश हुँदा न्यौपाने भएको हो। सिकरमा बसे भनी शिक्याल भनेको हो। यस्तै रीतले तत्तत् स्थानमा बसेका हुनाले उही-उही थर भएको भन्दछन् भने, औरंगजेब बादशाह भएको तीन सय वर्ष अन्दाजी भयो। नेपालका ठूला वंशावलीमा फलाना अर्ज्यालले, फलाना अधिकारीले यस काममा साइत हेरे भनी लेखेको छ। यो लेखमा चार-पाँच सय वर्ष माथिका कुरा देखिन्छन्। औरंगजेबको बखतमा आएका पनि भन्न भएन; फेरि २०० वर्षका बीचमा ४०० थर एकदम हुनसक्तैन। हाम्रा पिता बाजेहरूले पनि देख्ता-देख्तै आउँदा एकदम अमुकको यो थर भयो हेर हेर भन्नु पर्ने हो, तर भनेनन्। हामीले पनि देखेसुनेका छैनौं। २०० वर्षका बीचमा ४०० थर कसरी भए ? यो चार सय थरमध्ये कान्यकुब्जका एक थर पनि छैनन्। कान्यकुब्जको लेन-देन, खान-पान, चाल-चलन कर्मकाण्ड आदि धर्म-कर्म नेपाली, हामी कुमाइँ र पूर्बिया ब्राह्मणसित केही मिल्दैन, तसर्थ कान्यकुब्जबाट आएको ठहर्दैन। कान्यकुब्जदेश भित्रका हुँदा र सम्पूर्ण ब्राह्मण कान्यकुब्ज हुन् भन्ने प्रमाणले हामीलाई कान्यकुब्ज भनेको हो। सम्पूर्ण ब्राह्मण कुमाईं र पूर्बियाबाट भएका हुन्। हामीहरू हिमालय पर्वतमा तपस्या गर्नलागेका ऋषिहरूबाट पैदा भएका हौं। हामीहरू उही पवित्र भूमिमा छँदैछौं। हामी नेपाली वा गोरखाली ब्राह्मणहरूका पूर्वजहरूले बिगारेका जाडो खप्न नसकी सरयूपारी पुग्दा सरयूपारी ब्राह्मण बनी बसे। यिनका सन्तान केही सारस्वत भए। त्यताबाट पनि कोही गौड़ गई बसे गौड़ ब्राह्मण भए। त्यताबाट पनि दक्षिण पुगे दक्षिणी भए। यस्तै किसिमले गच्छ-गच्छ लागेका हुन्। यी सबै देशी विदेशी ब्राह्मणहरूका ठाउँ नेपाली गोर्खाली वा पहाडी ब्राह्मणहरू पो रहेछन् भन्ने मेरा मनमा

लाग्दछ। हो, होइन! हाम्रा नेपालीहरूले शिवको पूजा गर्न, ग्रहणको दान लिन, काट्टो खान तुच्छ सम्झँदा दक्षिणी भट्टहरू देशबाट आएका हुन्। नेपाली ब्राह्मणहरूले नसकेर होइन कि भन्ने ठान्दछु कसो हो। गाईलाई गौ भन्दछन्। गो शब्दको गौ हुन्छ; गौलाई रक्षा गर्ने भनी गोरक्षा भयो। मदिशे भाषामा क्षलाई ख भन्दा लक्ष्मण भनेको लखन भन्दछन्। त्यस्तै रक्षाको क्षालाई खा भन्दा गोरखा हुनआएको हो अथवा 'हमने गोरखा जी' भन्दा गोरखा हुन आएको हो। यस्ता गोरखा पूर्वकालदेखिका राजा-महाराजाका गुरु-पुरोहित भइआएका दयापात्र हामीहरूका पुरुषाहरू गोरखा पहाडैतिरका हुन्। हामीबाट बिग्री गएका मदिशे हुन्। मदिशेबाट बिग्री आएका हामी होइनौं। गोरखाली ब्राह्मण मानू ऋषि जस्ता नै हुने थिए। चारथोक व्यवहार ठीक नहुँदा तेज रहित भएका भूटा झैं देखिएका छन्। कुन-कुन ४ भने—दशकर्म नहुनू १, चाकर्नी दासी आदि स्वास्नी राखी वृषलीपति हुनू २, एकादशको शय्या लिनू ३, मासु खानू ४। यी चारले बिगारेको हो। दक्षिणी, नागर आदि ब्राह्मणहरूका दश कर्म हुन्छन्; मासु खाँदैनन्; घरमा विवाहिता एक पत्नी हुन्छन्; एकादशको शय्या छुँदैनन् र बासी भात खाए पनि ठूला शास्त्री पण्डितादि सिद्धिदार देखिएका छन्। मासु नखाने विवाहिता स्त्रीदेखि अरूमा आसक्त नहुने; एकादशाहको शय्या नछुने; दशकर्म भएका विप्रहरू कस्ता तेजीला छन्। यी चार कर्म नगरून् त नेपाली बाहुन ऋषितुल्य हुने थिए के गर्नू? चार थोकले बिगार्‍यो! नेपालका ब्राह्मणी आदि स्त्रीहरू जो शुद्ध छन् अन्यत्र कहीं छैनन्। यस्ता शुद्ध क्षेत्रबाट जन्मेका वेदपाठी विप्रहरूले जे भन्यो उही तथास्तु हुन्थ्यो। सो नहुँदा नभएको हो कि भन्ने ठान्दछु।

## पूर्विया ब्राह्मणको चाल-चलन

चाल-चलन ठीक नहुँदा गुल्मी र डोटीका बाहुनका हातको भात खाँदैनन् भन्दछन् कसो हो? एकै गोत्रमा पुरोहित कर्म, बिहेबारी

जान्नेले गर्दैनन्। छोराको विवाहमा तिलक र छोरीको विवाहमा दोहोरी खर्च लिंदैनन्। तामचीनका भाँडामा भित्र बाहिर सेतो कालो रङ्गरूपी लिउन खराब हुन्छ भनी भान्सामा लाँदैनन्। मट्टीतेल, मदिशे कागज आदि पनि लाँदैनन्। स्वास्नीमानिसहरू नील नपरेको धोएको शुद्ध चोलो लगाई भान्सामा जाने पनि छन् नजाने पनि छन्। धोएको भए पनि लोग्नेमानिसले भोटो लगाई भान्सामा जान हुँदैन, छोइन्छ। ऊन वा रेशमी सूती आदिका पछ्यौरा ओढी भान्सामा गए पनि छोइन्छ। मूसाले र भङ्गेराले छोएको छोइन्न भन्दछन्। धनीको र गरीबको भान्सा यौटै हुन्छ फरक छैन। धनीका भान्सामा कोही नबसी तल थर्लन हुँदैन; गरीबको तल-माथि गर्छन्। भान्सामा जाँदा पखालेको चोखो धोती फेरी तल आचमन गरी माथि भान्सामा घुँडा ठाडा पारी घुँडा भित्र हात पारी बल हाली गोग्रास, पितृलाई पुँडो सारी पञ्चग्रास हाली शिखा फोई नबोलीकन खान्छन। खाएको भान्सा गरीबले पनि छोड्दैनन्। भान्सामा पुग्नेबित्तिकै दिशा लाग्यो भने तल गई ओढे पछिका धोतीका छेउमा गाँठो पारी अर्को धोती फेरी दिशा गई आई चारतिरको धोतीको छेउ मुखमा पर्ला भनी गाँठो माथितिरै पारी भान्सामा जान्छन्। लङ्गौटी फेर्नेलाई आनन्दै छ। नयाँ मानिसले म पूर्विया हुँ, मेरो थर फलानू हो भने पनि पूर्ख्यौलीबाट साइनू र सम्बन्ध नसोध्याई जाँच-बूझ नगरी उसै भात खाँदैनन्। जात नेलब्रतबन्ध नगरेका छोरालाई कुखुरा आदिको मासु र विस्कुट आदि खान दिंदैनन्; बुद्धि बिग्रन्छ भनी १; दोस्रो छोरा-छोरीको मुखमा ख्वाइँ खाँदा आफ्नै मुखमा विस्कुटादि लाग्दछ भनी। च्याउ, लसुन, छ्यापी, प्याज, गाजर, सलजम, रामतोरिया, नुम्बा, घाँटी छिनेको डल्लो लौका, रातो मूला, कुण्डुको साग आदि खाँदैनन्। जिम्बू खाने धेरै र नखाने थोरै छन्। जगन्नाथजीको महाप्रसादमा उहीं १८ नालाभित्र मात्र छूआछूतको विचार हुँदैन; बाहिरको पाक्य भोग लाग्दैन। यस्तो नियम छ तापनि जबरदस्ती

सित सुकको महाप्रसाद १८ नाला बाहिर रेलबाद दगुराई घर लगी महाप्रसाद चाँडी खान द्विजहरूले पनि चलाएका छन्। अरू प्रसाद चलेको छैन। सिमी, बोडी आदिको तरकारी बिहान पकाएको बेलुका वा लुगा लगाई खाँदैनन्। तोरियाँ खाने पनि छन्, नखाने पनि छन्। मासुमा मिसेको तोरियाँ खाने नखाने दुवै छन्; ढकने पनि खाने नखाने दुवै छन्। घिउ धेरै हाली पकाएको पुरानु चामलको भात र ढकने हेर्दा फरक छैन तसर्थ खानु अवश्य हुँदैन। खीर पनि लुगा लगाई खान हुँदैन। धोती फेरेर खीर खाँदा पनि आफ्ना जातदेखि बाहेक अरू जातको बाहुनका पंक्तिमा बसी खायो भने जात जान्छ; भताहाले लिँदैनन्। खँगारेको आलुको अचार खेतमा लगी खान हुन्छ; चलेको छ। उसिनेका आलुमा तिल हाल्न हुँदैन जूठो हुन्छ; खँगारेको भए मात्र हुन्छ। एक मतले सप्तधान्यमा तिल पर्छ तसर्थ आलुको तरकारी हुँदैन। पानी एक थोपा पनि पारेको छैन भने नछुने हुँदा तीन दिन बारी चौथो दिन नुहाई शुद्ध हुने सातौं दिन देव-कार्य, पितृ-कार्य गरी मासु नखाने शूद्रादिले पकाएको घरमा खान हुन्छ भनी खाने नखाने दुवै छन्।

बजारमा भुटी बेच्न राखेको बदाम खान्छन्; भटमास मकै आदि खाँदैनन्। भीमफेदीतिर एकादशी पर्न गयो भने कोही खाइहाल्छन् नत खाँदैनन्। पेडा आदि कुराउनी र चीनी मिलाई बनेको चीज दही आदिमा चोपी खान हुन्छ। बेसनका लड्डु आदि खाँदा दही आदिमा चोपी वा यौटै हातले तरकारी अचारसित खान हुँदैन। अन्न परेको हुनाले सेल, पुरी, दम्यौरा आदि पनि खान हुँदैन। एकादशी आदिमा अन्न खाँदा प्रायश्चित्त गर्नुपर्छ तसर्थ फलाहार खाएका हुन्। गहुँ अन्न खानुहुँदैन। फापर, लट्टे, सिंघाड़ा, सकरकन्द, पिँड़ालु, तरुल, स्याकुर खाएका हुन्। फापरको पीठो फलाहार हो। काशी आदि देशमा कुट्टू भनी खान्छन्। पूर्बिया र कुमाई एकै पंक्तिमा बसी पुरी तरकारी आदि खाँदा धोती फेरेका भए पनि दुइ हातले खान्छन्। कुमाईंका छोरी पूर्बियाले विवाह गर्दैनन्।

शूद्रादिका घरमा पनि सरकारी आदिको भोज लशुन आदि; भैंसीको मासु, जाँड़-रक्सी का संसर्ग र नछुने हुँदा तीन दिनसम्म अलग नबस्ने अर्थात् नछुनेका घरमा खाँदैनन्। अन्त जन्त जाँदा चिउरा, मिठाई अचार ...री आदि खाँदा लुगा लगाएरै टपरे बाहुन मात्र खान्छन् अरू खाँदैनन्। यो अनुमान गरी जान्ने कुरा हुन्; लेखेर साध्य छैन। विवाह भोजमा शूद्रादिका हारमा बसी जनै लगाउनेले खानु ठीक छैन; नखानू भनेको छ। आफै आफ्ना पंक्तिमा बसी खानुपर्छ। गाईका गोठमा; देवता र विप्रका नगीचमा; पूजाकोठा र ...मा जुत्ताको प्रतिनिधि कठपाऊ (खराऊ) लगाएर जानु कदापि हुँदैन। दस घरसम्म कठपाऊ लगाई गयो भने राजाले गोडा काटी दिनु भनेको छ।

## कुमाई ब्राह्मणको प्रादुर्भाव

कुमाईहरू नैनीताल अलमोड़ा अर्थात् कुमाऊँ बदरीनाथ पहाड़ हिमालय पर्वतैबाट पूर्ववत् सृष्टिदेखि नै प्रादुर्भाव भएका हुन्; कान्यकुब्जादिबाट आएका होइनन्। कुमाऊँका हुनाले कुमाई ब्राह्मण भनेको हो। अघि कुनै कालमा नेपाल आएका हुन्। कुमाईहरू ठूला शास्त्री पण्डित बड़ा बुद्धिमान् बड़ा धनी हुन्छन्। कुमाऊँतिरका डिपटी आदि सारा कुमाई नै छन्। बिना अग्निले भात पकाई खाने उपाय आदि बुद्धिमानीका काम धेरै गरेका छन् अरे भन्दछन्। इनमा एकै गोत्रमा पुरोहित हुन्छन्। विवाह गर्नु ज्यादा गाहारो छ। पूर्वियाकी छोरी पाए विवाह गर्छन्। छोरीको विवाहमा दुलाहाका पुरोहितको र दुलाहाको बरणी गर्दछन्। दुलाहाका पुरोहितको दुलहीका बाबाको गच्छे अनुसार आमदानी हुन्छ। तल्लो बीस-तीसलाई बोल्ने पर्दैन। दुलहीतिरका पुरोहित मूल कलशमा गच्छे अनुसार भेटी राखेको तल्लो एघार-बाह्र रुपियाँ लिन्छन्। पद्धति अलग छ। भात भान्सामा कुमाईको बड़ो निर्णयसिन्धु हुन्छ। एकै घरमा पनि दुइ तीन भान्सा हुन्छन्। उसका हातको ऊ खाँदैन;

उसका हातको ऊ खाँदैन। विवाह गर्न भात भान्सा नमिल्दा बड़ो गाह्रारो हुन्छ। भान्सामा जाँदा उफ्रेर जानुपर्दछ। दाहिने गोड़ा भान्सामा राखेर बायाँ गोड़ा तल भैंबाट छोड़ी उफ्लन पाइन्न छोइन्छ। भान्साबाट भात तल ओह्राल्दा ढ्वाक-ढ्वाक आवाज हुँदा छोइन्छ। यो मुनासिब हो। पानीका धाराले छोइन्छ भनी भान्रू.बाट पानी तलतिर हाल्दैनन्। गरीबहरूका मानिस कोही छैनन् भने भान्सामा जलपात्र राखेर तलको काम गरी पानी अचाई भान्सामा जान्छन्। कुमाई दुइ प्रकारका हुन्छन्—पाका कुमाई र काँचा कुमाई। पाका माने पक्का र काँचा माने कच्चा हुन्। इनको बिहा-वारी र भात भान्सा चल्दैन। आफ्ना बाहेक अरू जातले पकाएको; छोएको सेल-पुरी खाँदैनन्। पीठो दूधमा मुछेको छ भने मात्र खान्छन् नभए खाँदैनन्। अरू भक्ष्याभक्ष्यको विचार माथिको झैं जान्नू। इनका छोरी बुहारी बिग्री पश्चायत भएको कम देखिन्छ। उद्रेक छ! हत्त-पत्त धन पनि खर्च गर्दैनन्। नेपाल मकैले पालिएको छ; कुमाऊँ कोदोले पालिएको छ। कोदोलाई मडुवा भन्दछन्। भटमास; कोदो; सामा र मसुरो खूब हुन्छ। कुमाऊँमा सामा र भटमास मिलाएको चीज र कोदाको रोटी खान्छन्। भात त अलीकती थालका छेउमा हालेको हुन्छ। नेपालमा मकैको ढींड़ो धेरै र भात अलीकती हुन्छ। कुमाऊँमा पनि ऐशेलु; काफल र चूत्रा आदि हुन्छन्। जो-जो फल र चीज-बीज नेपालमा हुन्छ; सो-सो कुमाऊँमा पनि हुन्छ। अघि कुमाऊँसम्म गोरखा सरकारको राज्य थियो तसर्थ गोरखालीमा गनिन्छन्। कुमाऊँको पानी बड़ो बढ़िया छ। एक गिलास पानी पिउँदैमा अनेक तर्कना गर्न सक्ने हुनछ। कुमाऊँको हावा-पानी अमृतै बराबरको छ। यस पानीबाट गोरखा पानीमा जानाले उज्वल बुद्धि बढ्छ। यस विषयमा लेख्ता ऊँच-नीच परेकामा विद्वानहरूले दया राखेर यस ठाउँमा यसो पो लेख्नुपर्दछ भनेमा सोही मुताबिक छपाइनेछ। कुमाईको भाषा बेग्लै हुन्छ।

## कुमाईको कान्यकुब्जी गोत्रप्रवरावली

| | | | |
|---|---|---|---|
| १ अगस्ति गोत्रस्य | | अगस्ति-जैमिनि-दधीचीति त्रिप्रवरस्य। | |
| २ आङ्गिरस | ,, | आङ्गिरस-बार्हस्पत्य-औदुम्बरेति त्रिप्रवरस्य | |
| ३ आत्रेय | ,, | आत्रेय-शातातप-सांख्येति | ,, |
| ४ आलावुक | ,, | सागर-गौतम-वशिष्ठेति | ,, |
| ५ उपमन्यु | ,, | उपमन्यु-कपिल-विरजेति | ,, |
| ६ औशनस | ,, | गौतम-वैतहव्य-सेनेति | ,, |
| ७ कनवट | ,, | कनवट अश्वत्थ-देवलेति | ,, |
| ८ कपिल | ,, | कपिल-काञ्चन-विश्वामित्रेति | ,, |
| ९ कात्यायन | ,, | कात्यायन-विष्णु-अङ्गिरसेति | ,, |
| १० कान | ,, | अश्वत्थ-देवल-देवसेनेति | ,, |
| ११ काश्यप | ,, | काश्यप-वत्स नैध्रुवेति | ,, |
| १२ कृष्णात्रि | ,, | कृष्णात्रेय आश्वलायन-सारस्वतेति | ,, |
| १३ कृष्णायसु | ,, | सव्य-च्यवन-सारस्वतेति | ,, |
| १४ कौण्डिन्य | ,, | कौण्डिन्य-अत्रि कौशिकेति | ,, |
| १५ कौशिक | ,, | कौशिक-जामदग्नि-आपवस्वेति | ,, |
| १६ गर्ग | ,, | गार्ग्य-घृतकौशिक-माण्डव्य-अथर्व-वैशम्पायनेति पञ्चप्रवरस्य | |
| १७ गौतम | ,, | अङ्गिरा-वशिष्ठ-बार्हस्पत्येति त्रिप्रवरस्य | |
| १८ जमदग्नि | ,, | जमदग्नि-वशिष्ठ-और्वेति | ,, |
| १९ पाराशर | ,, | पाराशर-वशिष्ठ-शक्तीति | ,, |
| २० बृहस्पति | ,, | बृहस्पति-कपिल-पार्वणेति | ,, |
| २१ भारद्वाज | ,, | भारद्वाज-अङ्गिरस-बार्हस्पत्येति | ,, |
| २२ भार्गव | ,, | भार्गव-और्व-च्यवन-आप्नव्य-जामदग्नीति पञ्चप्रवरस्य | |
| २३ मिहिरासन | ,, | मिहिरासन-वशिष्ठ-और्व-च्यवन जामदग्नीति पञ्चप्रवरस्य | |

| | | |
|---|---|---|
| २४ मिहिल | गोत्रस्य | मिहिल-असित-देवलेति त्रिप्रवरस्य |
| २५ मौनस | " | मौनस-वैत-हव्यसेनीति त्रिप्रवरस्य |
| २६ वत्स | " | वत्स-और्व-च्यवन-भार्गव-जामदग्नीति पञ्चप्रवरस्य |
| २७ वशिष्ठ | " | वशिष्ठ-वाशिष्ठ-शाक्त-पाराशर-च्यवनेति पञ्चप्रवरस्य |
| २८ विश्वामित्र | " | विश्वामित्र-मरीचि-कौशिकेति त्रिप्रवरस्य |
| २९ विष्णुवृद्धि | " | विष्णुवृद्धि-कौत्स-पुच्छदश्विलेति त्रिप्रवरस्य |
| ३० वैयाघ्र | " | वैयाघ्र-सांकृति-माण्डव्येति त्रिप्रवरस्य |
| ३१ शाकटायन | " | शाकटायन-आङ्गिरस-अलभ-आथर्वण-वैशम्पायनेति पञ्चप्रवरस्य |
| ३२ शाण्डिल्य | " | शाण्डिल्य-असित-देवलेति त्रिप्रवरस्य |
| ३३ शिशिहर | " | शिशिहर-कौशिक-जामदग्नीति त्रिप्रवरस्य |
| ३४ शौनक | " | शौनक-वशिष्ठ-पाराशरेति त्रिप्रवरस्य |
| ३५ सांकृत्य | " | सांकृत्य-वशिष्ठ-व्यावरेति त्रिप्रवरस्य |
| ३६ सावर्ण | " | सावर्ण-और्व-च्यवन-जामदग्न्य-आप्नवानेति पञ्चप्रवरस्य |
| ३६ हारीत | " | हारीत-देवरात-विश्वामित्रेति त्रिप्रवरस्य |

## जैसी बाहुनको प्रादुर्भाव

जैसी बाहुन मुख्य तीन प्रकारका छन्—वैकलेय १, गोलक २ र कुण्ड ३। यी जैसीमा उत्तम विकलायस्य अपत्यं पुमान् वैकलेयः जैसी अति उत्तम हुन्। 'मृते भर्तरि गोलकः' इत्यमरः—आफ्ना बाहुन मरी विधवा ब्राह्मणी बाहुनैसित बसेर पाएका छोरालाई गोलक जैसी भन्दछन्। पोई छँदै बाहुनैसित पोइल गई पाएका जार पुत्रलाई कुण्ड जैसी भन्दछन्। यी ३ थरिमा पूर्विया ब्राह्मणकी विधवा कुमाई ब्राह्मणले लगेर भएका सन्तान एकथरि, कुमाई ब्राह्मणकी विधवा

पूर्थिया ब्राह्मणले लगेर पाएका सन्तान २, पूर्थिया कुमाईं ब्राह्मणकी विधवा जैसी बाहुनले लगेर पाएको सन्तान ३। यी सबै जैसी बाहुन हुन्। विवाह गर्दा मिलाउन नाहारो पर्छ तापनि मिलाई विवाह गर्दछन्। जैसीमा तिमलसेना, गजुरेल, मोठभरी आदि जैसी बाहुन चिकलेय जैसी बाहुन भनिन्छन्। तिमसिना र तिमलसिना यो दुइ थरमा सिना भन्नाले सिनु सिना हुनजान्छ ससर्थ तेसो भन्न हुँदैन तिमसेना, तिमलसेना भन्नुपर्छ। खेत बारीमा मल बोक्ने सेना हुँदा तिमलसेना भनेका हुन्। तुलसीका मोठ भरि बत्ती बाल्ने भनेर मोठभरि भनेका हुन्। गजुर बसालेर काम गर्ने हुनाले गजुरेल भनेका हुन्। कटुंजेका तिमलसेनाहरू कप्तान, सुब्बा, डिट्ठा, सरदार मुखिया बराबर हुँदै आएका बड़ा धर्मात्मा छन्। जैसी बाहुनमा अत्रिका कोटेश्वरका नन्दिकेश्वर पराजुली सेठ हुन्। बड़ा दानी र धर्मात्मा थिए। अझ यिनका सन्तानमा जागिर खाएको देखिंदैन। गोरखा भोटाङ्का धीताल, भैमालका साहुकार फुयाँल, गजुरेल जैसी बाहुनहरू बड़ा धनी छन्। मोठभरिमा जन्मनासाथ सुब्बा भइआएका पनि छन्। यिनीहरू रकम कलम चलाउन नित्य कर्मादि धर्म गर्न बहुते सिपालु छन्। गजुरेल जैसी बाहुनको र सिस्नेरीका साहुकार घिमिरे जैसी बाहुनको बराबर दिहेवारी छ तापनि गजुरेल जैसी ब्राह्मणका हातको भात खाँदैनन्। साहुकार घिमिरे आदि सबै खान्छन्। यो अचम्मको घमण्ड छ। भखिका गाभी पाठकका पतञ्जलि गजुरेल पण्डित ज्योतिषी (दयाम) हुना हुँदा सरकारतकमा जाहेर थियो। महाशय ज्योतिषी गणेशमङ्गलले यिनै पतञ्जलिसित पढेका हुनाले बहुतै मान्थे। पतञ्जलि गजुरेल ज्योतिषीले बनाएको जैमिनि भारतको चालून अत्यन्त रसिलो राम्रो छ। काशीका महाराजबाट छपाएको त्यहीं हो। त्यस्ता विद्वान्ले बनाएका जैमिनि भारतको चालूनलाई कवि हरिविक्रम थापा सेभोले बनाएको भनी लेखेको छ।

कवि पतञ्जलिले बनाएको जैमिनि भारतको चालून भनी स्पष्ट

ठकुरानी र यी बाहुन हाडको दोस्रो चरित्र (भेड़ाको सींग गाडेको) धर्मशाला, नेपाल महात्म्य, ठूलो सप्ताह मण्डप विधि आदि बनाई ठूलो नाम कमाई परलोक भएको धेरै भयो। यिनका छोरा कर्णाखर पंत गजुरेलले छौंड़ा राखेर काम गराई साँदा रहेछन्। पछि छौंड़ा छिप्रिएर छौंडैले सत्यानाश पारे नाति कर्णाखरको छौंड़ा भन्ने अहिलेसम्म प्रसिद्ध छ। पूर्विया ब्राह्मण गजुरेल बागेश्वरीमा छन् भन्दछन्। जैसी बाहुन भरनाउले, धुलिखेल इलाका चौकी, च्यामान्डुपल्लु, चुइसमा, चपोली मझगाउँ आदि-तिर ठाउँ-ठाउँमा धेरै छन्। गोरखपुर जिल्लामा सुन्धा इन्द्रावरका सन्तानहरू बढ्तै बसेका छन्। विन्ध्यवासिनीको नेपाली धर्मशाला उनैले बनाएको हो। यी रईसमा गनिन्छन्। काशीका श्रीमान् राय साहेब शिवप्रसाद रेग्मी डिप्टी सुपरिण्टेण्डेण्ट पुलिस ३०० तनखा खाने उनको घर सात हजार चालनुकराड खरीद गरेर अन्दाजी चार-पाँच हजार खर्च लगाई लोहै लोहाका सत्सँग बढाई फर्मायसी भित्र रायसाहेबका नाममा चार-पाँच लाख सबै घरभन्दा अग्लो दूध विनायकमा घर हुँदा पन्ध्र-सोह्र हजार भित्र आफ्नैका नदिई सो घरको शोभा गराई आफू पटनामा बसेर काम गर्नेका हुनाले नेपाली-को इज्जत राख्ने रेग्मी साहेब बुद्धिमान र दर्शनीय छन्। जैसी बाहुनमा धर्मालेनलो जोत्दैनन्, गर्गोत्रले जोत्दछन्। यिनलाई ब्रह्म गायत्री छ। आफू आफूमा सुरो चलाई टीका चलाएका छन्। उपाध्याय ब्राह्मणहरूले जैसीलाई टीका लगाई दक्षिणा दिनु हुँदैन। वेद पढ्दछन्।

## हमालको प्रादुर्भाव

बाहुनले ठकुरीकी छोरीसित विवाह गरेर वा दोयम कलश पूजेर अथवा विधवा ल्याई पाएका सन्तानलाई हमाल भन्दछन्। हमाल भनेको केही अर्थ मिल्छ, जस्तै—बाहुले 'हँ माल' पैदा गर्ने छोरो

जन्म्यो भन्दा हमाल भनेका होला। हमाल बडा शूर, धर्मात्मा र नीतिज्ञ हुन्छन्। कप्तान सुब्बा आदि भैआएका छन्।

## भाटको प्रादुर्भाव

विप्रको बाहुनीबाट बाहुनबाहेक अरू जातले गर्भ गरी बाहुनीले पाएका सन्तानलाई भाट भन्दछन्। विप्राको घर बाहुनै हुँदा बाहुनीमा पनि केही कला आएकोले तेत्र नरकबाट भाटहरूले पगाईका वंशावली जोरेर सहुनी यशको गान गरेर खान सक्छन्।

## नगरकोटीको प्रादुर्भाव

नगरकोटि भनेका निवार हुन्। निवारको जात कौतर हुन्छ। जङ्गीमा जागिर खान नपाउँदा दुइ-चार निवारले मत गरे कि अब हामी निवारेगाउँमा, नवसौं क्षत्रिय बाहुन बसेका ठाउँमा गएर बसौं र हाम्रो निवारे बोलीको लब्ज छुटेर पर्वते बोली केही साफ हुन्छ र यहाँपछि हाम्रा सन्तानले जङ्गी पल्टनमा जागिर खान पाउने छन् भनेर निवारे गाउँबाट पर्वते गाउँमा जानलाग्दा यिनीहरूबाट फुटेर ( दाज्यू-भाइहरूले ) आफ्नो गाउँ छोडेर पर्वते गाउँभित्र जाने काम नगर भनी कोटि विन्ति गर्दा पनि नमान्दा नगरकोटि पद पाएका हुनाले र यिनै दुइ-चार निवार क्षत्रियको संगत गरेर नगर-कोटमा बसेका हुनाले नगरकोटि भनेको हो। जब गोरखाली बोली स्पष्टसित बोल्न लागे तब रैफल श्रीनाथ बाहेक अरू पल्टनमा दुइ-चार बसेका छन्। निवारनीहरूले पर्वते जातबाट पैदा गरेको नगर-कोटि हुन् भन्दछन् तापनि यो उचित होइन। संगतले गरेर अलि-अलि शूरा भएका हुन्।

—:*:—

# आले, थापा र राना मगरका थर

असलामी
अर्घाली
उचाई
एकचहीं
कनौजे
कमर
कमानजन
कालागाहा
केपछाकी
कँडका
कसरि
कुलाल
गड्मा
गरंगा
गिदेली
गुरुङ्छाने
गोदरसि
गैदे
घिमिरे
घिसौरै
घिवि
चुहान
छगेली
छहरी
जर्घा
टामलामी
डाला
तोरौंछाकी
थन्याली
थरघर
थादा
थादालि
थामी
दर्लामि
दुरुच्यान
दूध
नामज्याली
पचभैया
पागमी
पाथे
पालुङ्के
पाहारी
पुलामि
पुवार
पोञ्जी
फाल
बगाले
बटकुवारी
बराल
बकाथल
बर्द
बाचे
बाछाली
बामचाकि
बुचा
बुढाथोकि
ंशो
थाङ्नासि
भँडारी
मारु
मसरंगी
माकौं
मास्कि
रामजालि
राया
रिजाल
रिमाल
रुचाल
रेधामि
रोकाहा
लामतरि
लामटामि
लामिछाने
लुङेलि
सटाकसारि
समाल
सराकोटि
सवेंदा
साठिघरे
सापकोटा
सिजापति
सिजालि
सुयल
सूर्यवंशि
सोति
सोमस्था
हिरन
हिस्कि
हुनचङ

—:०:—

## आलेका अतिरिक्त

| | | | |
|---|---|---|---|
| गेलांर्गा | ढेगा | बीरकट्टा | लोप |
| गें | तिउसी | मोरम | लगुचे |
| गोरा | दुदाली | रखाल | समार |
| जाली | पिमि | राकासे | सोम |
| झेडी | फेवाली | रमतरी | सुसुलिम |
| डगाल | बभन्या | रूवा | सोमे |
| डिमा | वारासे | रेशमी | ओछाकी |

—: * :—

## थापाका अतिरिक्त

| | | | |
|---|---|---|---|
| अर्घौले | डँडाली | बाह्रघरे | लाया |
| कालासारू | डोरेली | बीरकट्टा | सुसुचे |
| केवारी | ढ्यागो | ब्लाङपानी | सनारी |
| ग्राजा | दगाल | याङजा | समै |
| गीयेल | दलाल | याँदी | सतुंगे |
| गेलास | दिशा | रजगाहा | सारु |
| गोरामारू | दुनचुन | रजाली | सिरु |
| गौद्ध | पादे | रयास्मो | सुनारी |
| म्यम्भी | पूर्वाछानी | रसाल | सुसुली |
| म्यामरीसुस | बरही | राक्रातकोटी | सोराली |
| भवा | बस्नेत | रानाखुलाल | हायो |
| ह्यारी | बामचा | रैका | होह्रो |

★

## रानाका अतिरिक्त

| | | | |
|---|---|---|---|
| अर्घौले | छेदी | पाँड्डुले | सतुंगे |
| केक्काली | डँडाली | फेवाली | सीम |
| गोना | ढोगा | वस्नेत | सुसुर्ली |
| गोना | ढोली | बामचा | सोमै |
| गेलाम | ढ्यागो | बाह्रघरे | ह्लागुचे |
| गोरा | तिउसी | बुलाल | ह्लायो |
| म्यस्भी | दाला | भीरम | ह्लोपा |
| गरँजा | दिशा | राकातकोटी | |
| जामली | दुनचुन | राज | |
| झवा | धादाली | सनारी | |

—: o :—

सुन सुन पंच हो म केहि भन्छु ॥
मगरका जातिको सबाइ कहन्छु ॥ १ ॥
पौने चार सय, थर कहियो ॥
जाती र धर्मको, संग्रह गरीयो ॥ २ ॥
मगरका थर छन् अति अनौठा ॥
एक कट्ठा गरि दिएँ, सब छनौटा ॥ ३ ॥
मगरले गरने, सब जाति धर्म ॥
बाहुनले गर्ने मगरको कर्म ॥ ४ ॥
जती जती गरि आए, उति सबै मैले ॥
संग्रह गरि दिएँ हेरि लिन् अैले ॥ ५ ॥

ठकुरिको कुलमा, गिरि जो गएका ॥
गिरि गिरिकन जो, मगर भएका ॥ ६ ॥
मगरको वंशावलि, हरायर जान्छ ॥
ठकुरिका गाउँमा, पसे पत्ता लाग्छ ॥ ७ ॥
चत्रि राजाहरूमा, हुन्छन राणा ॥
मगरको थर भनो, देखिन्छ राना ॥ ८ ॥
चंदेलको मासु, ठकुरिले खान्छन् ॥
शुङ्गुरको मासु, मगरले चाख्छन् ॥ ९ ॥
मामाकि छोरिसित, हक यिन्को लाग्छ ॥
भानिज छैन भने आरकाले माग्छ ॥१०॥
ठकुरि मगरको, यत्ति यौटा खुन्छ ॥
मामाकि छोरीसित बिह्यावरी हुन्छ ॥११॥
मामाका छोरालाई, जदौ जेठान् भन्छन् ॥
विह्यावरि नभैकन, साहिनु लाउँछन् ॥ २१ ॥
यसै उसले क्षत्रियबाट मगर भएका ॥
अघिका बुढा बुढीहरुले कहेका ॥ १३ ॥
छोरिका हातको, कन्या भए सम्म ॥
मगरले ढिड़ो दाल, खान्छन् भई गम्म॥ १४ ॥
मगरको बिह्या नभै, राजि खुसि सीत॥
कन्या लगे ढिंड़ो दाल खाने यिन्कोरीत ॥१४॥
पहाँलि विधवा, मगरले लान्छन् ॥
कोदो दाल छाड़ी, अरु सब खान्छन् ॥ १६ ॥

यिन्का छोरा छोरी देखि, कोदो दालचल्छ ॥
बिक्षा गर्न नसक्नेको, यही यौटा बल्छ ॥१७॥
मगरको पुरेत, बाहुन नै हुन्छन् ॥
सूत्केरिको पानी पन्ध्र दिनमा छुन्छन्॥ १८ ॥
श्राद्ध हुन्छ पिडिंमा, आङनमा खान्छन् ॥
नत्र भने पुरेत, सिधा लीई जान्छन् ॥ १९ ॥
ऋचाहरू नपढी, स्वाहा-स्वधा गर्छन् ॥
धर्मदेखी मगरको, भर सबै पर्छन् ॥ २० ॥
दश र एघार, बाह्र तेह्र दिनमा ॥
मरदा गौंत खाई, छुने रित यिन्मा ॥ २१ ॥
महालय श्राद्ध हुन्छ; अड्का परेमा ॥
फुल्पातिका पूर्व, षष्ठी बेलुकामा ॥ २२ ॥
श्राद्ध गर्नु सनातन, मगरको यै छ ॥
चाल चलन् मगरको, सत् अरु बेसै छ॥ २३ ॥
मगरका जातमा धर्माधिकार जस्ता ॥
भुसाल हुन्छन्, पकड्ने रस्ता ॥ २४ ॥
निमकको सोझो गर्ने, मगरको जात ॥
जहाँ गयो वहाँ, मालिक् लिने हात ॥ २५ ॥
असल मगरको थेप्त्रो हुन्छ नाक ॥
जुँघा दाह्री हुँदैनन् ठूलो हुन्छ चाक ॥ २६ ॥
सानु हुन्छ टाउको, चेप्टो हुन्छ ढाड् ॥
बाटिएका पिंडौला, ठूलो हुन्छ हाड ॥ २७ ॥

डोको नाम्लो भारि-तारि परि आए बोक्ने ॥
वैरिसित अगिसरी, लडी खानसक्ने ॥ २८ ॥
लडाईमा गएपछी फत्ते गरी आउने ॥
सर्कारले दिएका तक्माहरु लाउने ॥ २९ ॥

—:०:—

# मगरको प्रादुरभाव

तनहूँ गोरखामा दशैं गर्न ठकुरी राणालाई राजा तुल्याई दशैं गरेका अधिकारी बनाई आजदेखि मैले गर्ने काम गर भनी हुकुम हुँदा यसैको अपभ्रंश हुँदा हुँदा मगर भएको हो। यसै उसले च्वाँचेका मासु खान्छन् तापनि मगरका पुरेत बाहुनै छन्।

आलेको अर्थ, अघि बादशाहका बखत मुसलमानहरूले ब्राह्मण क्षत्रियको जनै चुंडाली अनेक उपद्रो गर्दा ठकुरीहरूले विचार गरे कि मुसलमानलाई सुगुरले छोयो भने उनीहरूले ठूलो प्रायश्चित्त गर्नुपर्छ। तसर्थ ब्राह्मणका निम्ति हामीले जनै छिनाली सुँगुर पाली बथानै पारी मुसलमानहरूलाई यताबाट दपेटौं भनी आ सुँगुरले भन्दा भन्दा सुँगुर चाहिं उड्यो, आले बाँकी रह्यो। यिनी आले मगरहरूले मुसलमानहरूलाई लगारी ब्राह्मणको रक्षा गरेका हुनाले मगरका पुरेत बाहुनै छन्।

मगरका कुलमा ठुला सिद्ध नामदार लखन थापा भन्ने महापुरुष भए। यिनले शहर गोरखामा लुगाको बाहुली एकदम पंच भलाद्मीका माझमा निचोरेछन्। अकस्मात् बाहुली निचोरी पानी आएको देख्दा अचम्म लाग्यो? किन यो उद्रेक भयो भनी पंचभलाद्मीले सोधनी गर्दा लखनथापाले भने कि काशीमा गंगाजीमा नाउ बुड्दा मैले हात हाली झिक्दा बाहुलो भिजी निचोरेको

हुँ। उही दिनका मितिमा नाउ बुडेको हो होइन भनी चिठीद्वारा बुझदा यस्ता अनुहार भएका नेपालीले नाउलाई उठाएको हो भन्ने प्रत्युत्तर आउँदा हो ठहऱ्यो। बरपरको बात थापाउने भनी थापा भनेको हो। यस्तो अनेक देखाई परम पदमा गए। पछि उही मगर म जन्मेको हुँ भनी धेरै उपद्रो गर्दा नकली लखनथापाले रूखमा झुण्ड्याई माऱ्यो। सकली लखन थापा ठूला मानिस भए। फेरि अघि ४ जनरलमाका १ जनलर गेमानसीं राना भए। फेरि ११ सालका भोटका लडाईमा १२० धार्नी ओजन शरीर बड़ो भारी टाउको हुने बुद्धि बलं रानाका तिग्रामा बैरीको भाला लाग्दा बसीबसी सातौटा भोटे काटिदिदा भोटेहरूले पछिल्तरबाट काटी निजको जिउ बेपत्ता गराई लासा लगे भन्छन्। रणमा यहाँसम्म गर्नें वीर पुरुष शूरा हुन्छन्; रामु आले भामु आले आदि अघिदेखि करनेल भई आएका छन्। कप्तान लपटेनको के गिन्ती, अंग्रेजी सरकारी पल्टनमा पनि मेजर सुबेदार बहादुर ता हिसावै छैनन्। निमकको सोझो गर्ने मगर हुन् भनी अंग्रेज सरकारले आफ्नू जो रित छ, उही गर भनी दशैंमा कोत पूजा आदि गर्न बोका आदि बराबर दिएका छन्। आफ्ना सनातन रीत थामी टाढा-टाढा बसेका यिनीमा विश्वास पूरा छ।

## मगरको श्लोक

चेप्टो छाती पिठीऊँ, कमर शिर नयन् केहि साना भएका।
बाटीएका पिडौंला शरिरभरि नसा ढाकि भित्रै गएका॥
धेरै अग्ला न पुड्का गहुंसरि रङका, ज्यू निरोगी छ भारी।
नेप्टो नाक् हुन्छ ज्यादा असल मगरका नास्ति जूँघा नदाह्री॥

# गुरुङको प्रादुर्भाव

अघि केही कालमा कास्कीका जगिस्वान नाम गरेका राजा आफ्ना गुरु पुरोहित भोजराज नाम गरेका ब्राह्मणसित हुकुम भए कि हे गुरुजी ! यी गुरुङहरू अघि महागुरुहरू थिए। फेरि पछि गुरुङ मात्र के कारणले भए ? फेरि ४ जातका गुरुङ र १६ जातका गुरुङ गरी २ किसिमका गुरुङ कसरी भए ? फेरि यिनीहरूको चाल-चलन विहेवारी कस्तो छ ? गुरु भन्छन्, महाराज ! अघि पिउठाना भन्ने जग्गाका भारद्वाज गोत्र, सूर्यवंशी राजाको कुलमा गोचन नाम भएका राजाका लोचन नाम गरेका जेठा छोरा र रोचन नाम गरेका कान्छा छोरा गरी २ छोरा रहेछन्। यी २ छोरामध्ये जेठा लोचन बाबु-आमाका मन नपरेका रहेछन्। कान्छा रोचन पियारा हुनाले राज्य जेठालाई नदिई कान्छा रोचनलाई दिएछन्। तब जेठा छोरा लोचनका मनमा आफ्नो वैराग्य चली विरक्त भै काली नाम भएकी आफ्नी रानीलाई, आफ्ना गुरु पुरोहित गर्गगोत्री मुकुन्द लामिछानेका छोरा बलिलाई र बलिकी ब्राह्मणी काशी नाम गरेकीलाई, आफ्नू सेवा गर्ने केरसिलाई र निजकी स्त्री फली नाम गरेकी खवासेनीलाई समेत जम्मा ५ साथी लिई राजकुमार लोचन त्यतावाट अनुष्ठान गर्न भनी कैलाश हिमालयतिर गए। बाटामा १६ वर्षदेखि २० वर्षसम्मका चिछट्ट राम्रा हाँस हिंडेझै ढल्की ढल्की साड़ीको गल्थो कैले माथि कैले तल सारी बरांतका कलाबत्तुको काम भएका झिलिमिलि जुत्ता लगाई आँखाका सुरसुरमा सुरमा लगाएका कालीटिकी छाप लगाई बहुमूल्य कपड़ा पोशाक पहिरी अनेक तरहका गहना लगाई ओछयाउने गुन्द्री आदि बोकाई सुन्द्री हँसुली आदि देखाई हाँसी-हाँसी कर्के आँखाले हेरी ऋषिपंचमीको पाइलो सारेझैं सारी फर्की-फर्की ती तीनै जनालाई हेर्दै जांदाखेरि त ती राजपुत्र गुरुपुत्र खवास—तीनै जना मोह भएछन्। अलिक पर

भेट गरी बातचीत गर्दा मन मोह भएछन्। बास कहाँ बसौं भनी विचार गर्दै आँटा कहीं नपाउँदा थौटा भट्टी रहेछ भट्टी परोस् यहीं बसौं भनी सबै जना बसी खाई-पिई निवारे सुताई गरी दुई रात बसे गरी बिताई तेस्रो रातमा ती वेश्याहरूले बहुमूल्य आने मद (शराब) का शीशी किनी सबलाई सबंत भनी पिलाई दिंदा ती लट्ठ भएको जानी जो भएको श्री-संपति लिई ती वेश्याहरू भागेछन्। भोलिपेर अबेर उज्यालो भई सकेपछि बिउँझी उठी हेर्छन् ता वेश्याहरू श्री-सम्पत्ति र जनैमा सांचो औंठी झुण्डाएको हुँदा त्यो जनै समेत झिकी जात पनि चोरी लाँदा मद खाई भ्रष्ट भई जात पनि छुस भएको देखी मन विरक्त भई वैराग्य उठी सो बासबाट ३ जना कैलाशरूपी हिमालय पर्वतमनि गई नदीका किनारामा गुफा भेट्टाई त्यहीं खरको कुटी बनाई रानीसँग बचेका केही द्रव्य रखादिले र कन्द-मूलले खाने बन्दोबस्त बाँधेर तपस्या गरी केही कालसम्म रहँदा बस्ता एक दिन राजपुत्र र गुरुपुत्रले केरसि खवासेसित भनेछन् कि तिमीले हामी २ जनाको बहुतै सेवा टहल गरी खुस गराएको हुनाले अब तिमीलाई खवास भन्नैनौं। हामीहरू-बाट कर्जा जति लिएको थियो उति सबै माफ भयो। ऋणबाट पार भयौ। सबथोक थापाएको हुनाले केरसीं थापा भन्नेछौं। आज-देखि भान्से समेत भई भात पकाउनू। केरसीं भन्छ—मैले पकाएको भात कसोरी खानुहुन्छ? यो काम ठीक पर्दैन कि! बाटामा वेश्याहरूले हाम्रो कावा लिई दिएका हुनाले कैलासरूपी हिमालयमा कर्म आतले पकाएको भात खाए पनि दोष हुँदैन भनी धर्म शास्त्रमादिमा बताएको छ, पकाऊ हुन्छ, भने। उस दिनदेखि केरसिकले पकाएको भात सबेत खाई अनुष्ठान गरी बसेका रहेछन्। यस्तै कर्म गरी रहँदा बस्ता राजपुत्र भएका लोचनले जेठा घले महागुरुङ माहिला बोताने महागुरुङ कान्छा लामा महागुरुङ भन्ने ३ छोरा र कवमी नाम गरेकी जेठी, गोरी

नाउँ गरेकी कान्छी छोरी समेत जन्माएछन् । गुरुपुत्र भएका वलि आचार्यले जेठा लामिछाने महागुरुङ कान्छा लोने लामिछाने महागुरुङ गरी २ छोरा, कुमारी नाउँ भएकी जेठी, नारी नाउँ गरेकी माहिली, मली नाउँ गरेकी कान्छी समेत ३ छोरी जन्माएछन् । तब लोचनकी र वली आचार्यको कुटुम्बरी लाई छोरी लिन-दिन गरी छोरा-छोरीको बिहे गरिदिएछन् । राजकुमार पुत्र घले, घोताने, लामा र गुरुपुत्र लामिछाने भन्ने ४ जात भनी बोलाएछन् । केरसीं थापाका २ स्त्रीतिर गरी दशवटी छोरी र पन्युथापा १ डोरथापा २ केपचैथापा ३ क्रोचैथापा ४ प्यातुकु थापा ५ दोचैथापा ६ प्रुचैथापा ७ थींचैथापा ८ थोचैंथापा ९ खुलाल थापा १० भयचैथापा ११ कोके थापा १२ कुपचैथापा १३ नानचैथापा १४ लेगैथापा १५ रूपचैथापा १६ थी १६ छोरा जन्मेका हुनाले १६ जात भनी बोलाएको रहेछ । १६ भाईका आफआफैमा कुटुम्बरी लाई छोरी लेन-देन गरी बिहेवारी चलाएछन् । त्यस्तैमा १६ जातमध्येको नानचैथापाले ४ जात मध्येको घोतानेकी मर्फि नाउँ गरेकी छोरीलाई बिगारी दिएछ । तब ४ जात भएका महागुरुङहरु जम्मा भई हामी राजपुत्रकी छोरीलाई तिमी खबासका सन्तानले बिगारेपछि तिमीलाई मारी दिनेहुँ भनी हातमा तरवार निकाली काट्न लागेछन्, तब १६ जातहरू जम्मा भई हात जोरी हामी खबास सन्तान हौं बिरायौं रक्षा गर्नुहोस्, हामी १६ भाईले तपाईं ४ जातका अगाडि गई सिर झारौंला, पछि हिड्डी जावी बोक्नौंला भन्दाएका काम गरी बसौंला बिहे गर्दा परिआएको काम गरी भेक दै-दस्तुर खाऔंला, हामा भाईलाई नमारिदिनुहोस्—

भने । १६ जातले यात्रा कबोल गरी बिन्ती गर्दा ४ जातहरुले नानचैथापालाई नमारी छोडी दिएछन् छोराहरूको झगडा भएको देख्दा लोचन, वली आचार्य, केरसीं थी ३ जना अंभा भई फैसला गरेछन् । ४ जात राजपुत्र र गुरुपुत्रका सन्तान हुनाले र १६ जात खबास पुत्रका सन्तान हुनाले ४ जातका र १६ जातका बीच छोरी लेन-

देन गरी विहा नचलाउनू। यौटी छोरी बिग्री गई तापनि अब उप्रान्त १६ जातकी छोरी ४ जातले बिहे गरे भने बात लाग्दैन, ४ जातकी छोरी १६ जातले बिहा गर्‍यो भने खवासका सन्तान भै बात लाग्ने हुनाले ४ जातहरूलाई पातकी सान भनी मोरु १६ तिर्नू भन्ने वाचा कवोल गरेका हुनाले उस दिनदेखि सान भनी मोरु १६ लिने-दिने स्थिति गरेछन्। लोचन बलि आचार्यहरूले पहाडमा गई भुन ली खानी वस्तु निकाली खाई बसेका र उनीहरू परलोक भएपछि हिमालयमा खाने वस्तु नमिलेको हुनाले त्यतावाट सबै जना उठी लमजुङ भन्ने जंगलमा आई घले महागुरुङलाई राजा थापना गरी जङ्गलको मङ्गल गरी बसेछन्। राज्य गरी बसेका केही कालपछि निज घले राजाको र साही राजाको युद्ध हुँदा घले राजाको हार साही राजाको जीत भयो। तब महागुरुङ भन्ने नाउँ हटाई गुरुङ भन्ने नाउँ राखिदियो। सोह्र जातहरू जम्मा गरी घले राजाका सन्तानसंग वस्ने हो कि हामीसित जान्छौ भने। यसरी साही राजाले १६ जातिहरूलाई रोजाउँदा हाम्रो बाबु बाजे दाज्यू भाई मारिदिने घर्ती नुवाकोटेसंग जाँदैनौ, यी ४ जातका सन्तान जहाँ जहाँ जान्छन् वहाँ वहाँ हामी १६ जातका सन्तान पनि यी जातका गुरुङहरूका टहल गरी मानी बस्तछौं, वाचा कबोल गरी बसेका छौं भन्दा नुवाकोटे साही राजा आफ्ना दरबारमा गए। यी गुरुङहरूको अवस्थल लमजुङ, कास्कीको भुज्दी, पर्वतको धानरुङ यी ३ ठाउँ हो, यतैवाट गच्छ गच्छ भएका हुन्। महाराज यस्ता तरहले गुरुङ भएका हुन् भनी भोजराज गुरु प्रोहित ब्राह्मणले कास्कीका राजा जकिलाई बताई दिएका थिए। गुरुङ जातीको कथा प्रादुर्भाव यता थपिएको चाल-चलन आफै बुझ्नुहोला—

१६ जातको बिहे हुँदा ४ जात बसी १६ जातका दुलहा-दुलही-लाई ४ जातले टीका लगाइ दिनुपर्छ, दुलहालाई फेटा दुलहीलाई पछेउरा दिनुपर्छ, ४ जातको बिहे ४ जातैमा गर्छन्, १६ जातको

गूरुपुत्र र राजपुत्र र खवास्को रण्डिबाजी हुँदा ।
भट्टीमा बसि मद्यहेरु परदा, भारी नशाले छुँदा ॥
गूरुबाट महागुरुङ् भइ पछी गुरुङ् भएका महाँ ।
चारै जात र सोह्र जात हुनगै बिहे गरेछन् तहाँ ॥१॥

गाउँ गाउँ कुसङ्गले गरि फरक् भाषा हुनाले अनि ।
एकैछत्त गरी बसेछन सबै हिमालयैमा पनि ॥
यो वंशावलि जो गुरुङहरुको देखिन्छ राम्रो छ यो ।
नेपाल्मा गइ जो बुझेर मइले छापा तयारी भयो ॥२॥

पचीस् सालमहाँ गुरूङ लछमन् कर्णेल साहेबले ।
चारै जाति र सोह्र जाति यि मिलाऊने त हीसाबले ॥
बिन्ती पारि ठुलो सनद् गरिदिंदा श्रीतिन् महाराजले ।
वीहे गर्न र खान पान त मिलाएछन् ति गूरूङले ॥३॥

गूरुङ्को खलबल् अघी सतहतर् साल्मा उठेको हुँदा ।
राखेको झिकि लालमोहर सनद् नीकालि देखाउँदा ॥
चारै जाति र सोह्र जातिहरुको एकै भएको महाँ ।
मैले हेरि बुझी गुरूङहरुमा बिन्ती चढाएँ यहाँ ॥४॥

चारै जाति र सोह्र जातिहरु छन् कर्णेल नेपालमा ।
कप्तान्को गिनती छईन त सुवेदार्हेरु छन् देशमा ॥
कोही दुःख भई नबिग्रुन भनी दर्जा बढाई दिने ।
नेपाल्मा गुरुङैहरू छन सबै धर्मँ गरी जो लिने ॥५॥

हिन्दुस्तान जताततै छन यिनीं अंग्रेजि छाऊनिमा ।
सुबेदार बहादुरै भइ भई तक्मा लि घुम्छन् सिमा ॥
लड्नामा यि लडाकि छन् बहुतई अर्जुन जस्ता सबै ।
सो संग्राम् नजितेर एक पनि जो यी फर्किंदैनन् कबै ॥६॥

छोटा मोटा पिडौंला नयन नङ नसा केहि भि‍ै भएका ।
गाला केही उठेका गरधन पिठिऊँ छाति चेप्टो भएका ॥
भुस्तीग्रे बिघ्न शूरा गुरुङहरु सबै वैरिलाई भगाई ।
गादो पारो खुकूरी भिरीकिन हिंडछन् टोपि कालो लगाई ॥७॥

## किराती ( राई ) को प्रादुर्भाव

हनुमान् ढोकाबाट पूर्व ४ नम्बर भोजपुर ७० कोश पर्दछ । यहाँ सरकारी अदालत, जङ्गी परेट, गोस्वारा, हुलाक-घर आदि अड्डाहरू छन् । यो ठाउँ किरात देशको माझ पर्दा माझकिरात भनेका हुन् । यसको सिमाना दूधकोशी पूर्व, अरुणकोशी पश्चिम, चूरे महाभारत-देखि उत्तर, भोट-सिमानादेखि दक्षिण हो । यहाँ चामलिङ राई, बनतावा राई आदि रहन्छन् । किरातमा रहने भनी राईहरूलाई किराती भनेका हुन् । 'किराती' शब्द संस्कृत पनि हो । दूधकोशी-बाट पश्चिम, तामाकोशीदेखि पूर्वलाई ओल्लो किरात भन्दछन् । यहाँ रूजाली राई आदिहरू बसेका छन् । मेचीदेखि पश्चिम, अरुण बाद-शाहदेखि पूर्वलाई पल्लो किरात भन्दछद् । यहाँ लिम्बूहरू बसेका छन् । पहिले आदि सृष्टि हुँदा पृथिवी र आकाश उधो एकाछेउमा जोरिंदा पृथिवी आमा, आकाश बाबु भई एउटी कन्या निनामरेमा नाम भएकी जन्मिछन् । ती बढेर जमान भई हावा ( वायु ) गर्भ-स्थानमा डुलेर गर्भवती भई एउटी छोरी निनियामा भन्ने जन्माइ-

छन्। तिनको पनि उमेर पुगेर जमान हुँदा आफ्नी आमासित—हे आमा! तिमीले मलाई कसो गरी पायौ भनी सोध्नी गर्दा आमाले—हे छोरि! मैले ता वायु डाकेर गर्भस्थानमा हुली तँलाई जन्माएँ भन्दा त्यो निनियामा छोरी डाँडामा गई हावालाई डाकी, ती हावा पाखा भित्ताबाट डाँडा-डाँडा हूँ गर्दै आएकामा आमालाई कहँदा आमाले—हे नानी! ती वायु ता तेरा बाबा हुन्, तेरा पति ता माथि आकाशमा रुवापा भन्ने शुक्र पो हुन् भन्दा बाबुलाई बिदा गरी शुक्रलाई कसोरि ल्याउँ भन्दा आमाले जीगियो भन्ने पंछीलाई दैदस्तुर दिई कलिया पठाउँदा शुक्र ता पश्चिमतिर अस्ताउँदा त्यस ठाउँमा बृहस्पति बसेका रहेछन्। तिनै बृहस्पतिलाई कलियाले जानै पर्छो भन्दा म यस्तो नराम्रो गँड़हा छु। अहिले म गएपछि अवश्य मनपर्दैन, भो जाउ भन्दा कलियाले निश्चय हेलाँ हुनेछैन भनी करकाप गर्दा हुन्छ त भनी पोशाकहरू लगाई कलियाका साथ लागी आए। घरनेर पुगी कलियाले खबर दिई हेर्छन् त नराम्रा गाँड़ पनि हुँदा मन नपरी फर्काइदिंदा कलियासित बृहस्पतिले भने—म भन्दै थिएँ दिदैनन् भनी अब म भरे फर्कंदा घाम सूर्यको ताप बढाई पृथ्वीको झार-पात, समुद्र सुकाई जान्छु। त्यस बखत ती कन्या असतीको कलेजो फोक्सो सुकेर आउँछ। यस रूखका टाकुरामा जलुकाको पात ओछ्याई त्यसमा पीसाब गरी जान्छु। सारै आखिरी परेका बखत तिमीले आफ्ना पुछरले त्यसका मुखमा अलि अलि छर्किदिनु र विधाता कहाँ छ भनी आँखा उघार्छै। त्यसै मौकामा पियाइदिनु भनी अह्राई गएछन्। त्यत्ति पिएकाबाट गर्भ रहीगएछ। उसले म गर्भिणी भएँ भनी विचारै पाइन। त्यसो भएकोले सर्वजात पाउने भइछ। पछि आउँदा पो मनमा आश्चर्य भई पहिला जन्मेको रबुची भन्ने अरेरी काँढ़ा, दोस्रो जन्मेको धुगेरवा काँढ़ा, तेस्रो जन्मेको चोधाम काँढ़ा, चौथो जन्मेको भुसुना, पाँचौं जन्मेको बाँदर, छैठौं जन्मेको वनेसखण्डी बाघ. सातौं जन्मेको

किराती रहेछन् । यसै उसले बाघका भाई किराती हुँदा सिंह जस्ता किराती देखिएका छन्, पहिलो प्रमाण यही रहेछ । दोस्रो दशै किरातीहरूको बस्ती अधिको सोमाङ्कद वाराहक्षेत्र हुँदा यो दशै किरातीहरूको काश्यप गोत्र भएको हो । यी किरातीहरूले गुरुङ-सिनी, मगर्नी, भोटिनी, संन्यासिनी यस्तै हिसाबले तल्लो जात र माथिल्लो जात राखेर जन्मेका नौ लाख किराती भएका छन् । दस किरातीहरूको अलि-अलि फरक भई दस किसिमको भाषा भएछन्, तापनि मुख्य भाषा यौटै छ । चामलिङ राई १, वनतावा राई २, थुलीङ राई ३, कुलुङ राई ४, खालीङ राई ५, यान्दरङ राई ६, सापाङ राई ७, गोधङ राई ८, दासीङ सामा राई ९, मनथनु राई १० । यी दस राईमा थुलीङ माने थुलीङ आदि पाँच थरिको र वनतावा आदि पाँच थरिको व्यवहार आपुसमा अलि-अलि फरक छ । मेगचन रु० १० पैसा भने यी दशै जाति तिर्छन् ।

## दशै किरातीको बिहेवारीको चाल-चलन

दशै किरातीहरूको विवाह सरोवरी चलेको छ । मामाकी छोरी फुपूकी छोरीको गोड़ा धुन्छन्, विवाह कदापि गर्दैनन् । धनीको केटी माग्न जाँदा कलिया भनी दुइ जना मानिस, दुइ चिण्डा रक्सी पठाई सो केटीका घर पुगेपछि रक्सी पञ्च भलाद्मीलाई बाँड़ी आफु-समेत खाए भने केटी दिने पक्का भयो । सो रक्सीको चिण्डो फिर्ता गरिदिए भने केटी दिएन भनी जान्नुपर्छ । केटी तरफका मानिस-हरूले कलियालाई जस्तोसुकै गाली, हप्की-दप्की गरे पनि हात जोरी जीउ-जीउ गरी बोल्नुपर्छ । चिण्डाको रक्सी नखाएसम्म मान्नुपर्दछ । विवाहमा नत्थ अधिको हो तापनि तिलहरी नभई हुँदैन, सो पनि नभए पोते ता नभई हुँदै हुँदैन । विवाहका दिन आठ-दस दमै बाजा बजाउँदै जाँड़को सगुन गर्दै, दुलहालाई सेना

लुगाको फेटा गुताई सिक्री लगाई, छाता ओढ़ी जान्छन्। उनीहरू-का बाहुन बिजुवा भन्नेले विवाह गराउँछन्। नाच-कीर्तन हुन्छ, गीत गाउँछन्। भोलिपर दुलही लिई आउँछन्। माइतीहरूले दिने कुरा दिन्छन्। चोरी विवाह गर्नेले पनि बाहुनले कहेबमोजिमको दिनमा विवाह हुन्छ। विवाहको धन्दा छिनेपछि माइतीले खाने ४ कल रीत अठार रुपियाँ र करकोशेली गरी आउन-जान बाधा फुक्छ, तापनि वाग्दानको रीति रहेकै हुन्छ। पक्का हुँदैन। व्यभि-चार गरेका पक्षमा जार हाम्र हुँदैन खर्च उत्ती पर्छ। धनीका पनि चोरी विवाह गरेको फाप्छ भनी चोरी विवाह गर्दछन्। विवाहका विधिमा बाहुनको काम छैन। मधौवा फेदाङ्वाले गर्छन्। कर्म गर्दा भाले पोथी कुखुरा राम्रा नभई हुँदैन। भालेको रगत आएन भने जाया जन्म हुँदैन। दुवैको रगत आयो भने दुवैको बढ़िया हुन्छ। गरीब राईहरूको विवाह गर्दा हाट बजारबाट गीत गाएर केटी लगी एक-दुइ महीनापछि चार-पाँच चिण्डा जाँड़, दुइ चिण्डा रक्सी, दस किरातको दस रुपियाँ भेटी, हुनेको सुँगुर, नहुनेको सुँगुरको साँप्रो लिई ससुराली मात्र जान्छन्। किरातीहरूको सहो-दर विधवा भाउज्यू लगेमा बात लाग्दैन। अरू कुरा गरे बात लाग्छ। कोही किरातीकी छोरी राम्री तरुणीमा छेत्री-ब्राह्मणहरूले कायाकरनी गरी जाहेर नगरी बसे भने किरातीको देवा सो केटा-लाई लाग्ने हुन्छ। चेपाङ भएको आमा-बाबुलाई जाहेर गरे केही हुँदैन, नगरे लुलो लँगड़ो हुने हुन्छ। खानेकुराका हकमा हुनेले धातुका भाँडामा पकाई खाने, नहुनेले माटाका हाँड़ीमा पकाई खाने। सोही चुह्लामा कसैलाई देख्न नदिने हुनाले बाहिरी चुह्लो भित्रै हुन्छ। भित्री चुह्लामा सदासर्वदा जाँड नरहेमा पितृहरू भाग्छन् भनी सदाकाल प्रेमसित जाँड़ राखी छाड्छन्। खानाका हकलाई सिस्नु ज्यादा खाने चलन छ। विवाह आदि शुभ काम गर्दा सकेसम्म पांडुरे कोदो, केही सीप लागेन भने मामूली कोदो

नभै हुँदैन। छोरीको ३ दिनमा, छोराको ४ दिनमा नामकर्म हुन्छ। पास्नीमा भात खुवाउँदा छोरीलाई ५ महीना, छोरालाई ६ महीनामा खुवाउँछन्। ठहरमा अनेकानेक पदार्थ राखी मामाहरूले थाल, बटुको, पोशाकहरू पनि दिनुपर्दछ। रुपियाँ, मोहर, पैसाले मुख पुछी राख्नुपर्छ। सक्नेले बाजा बजाई नाच लाउँछन्। ३।५ वर्षमा छेवर गर्दछन्, नयाँ लुगा लाउँछन्, गाईका गोठमा वा आँगनमा ब्राह्मणले कहे बमोजिम गर्दछन्, आफ्ना बाहुनलाई सीधा, दक्षिणा दिई आफूहरू इच्छाअनुसार भोज लाउँछन्, नाच कीर्तन पनि हुन्छ। जन्मदा, घटता गौंत दिने ब्राह्मण हुन्छन्। ब्राह्मणले लेखिदिएको नाम चिह्नामा लेखिन्छ। आफ्ना जातका माथौत्राले राखेको नाम बोलाउने हुन्छ। ज्योतिष विषय हेराउने चिह्नाका नामबाट हुन्छ। थोता, पितृ मान्नेले कुलदेवताको पूजा चैत बैशाखमा रूखका पालुवा चढ्दैमा वर्षैनि गर्नुपर्छ। बलि दिंदा कसैका कुखुरा, बोका, सुँगुर, माछा पनि दिन्छन्। सोह्र श्राद्धमा घैयाको चामल, चिउरा, नयाँ अदुवा नभै हुँदैन, पांडुरे कोदाको जाँड़ पनि नभै हुँदैन। केराको ठुल्पा भएको पात राखी बुझाउनुपर्दछ, यसलाई तुप्ला भन्दछन्। चिण्डामा जाँड़ हाली केराका पातमा राख्नुपर्छ, त्यसै पातमा नयाँ अदुवा कहे बमोजिमका फूलहरू पनि राख्नुपर्छ; बुझाउने सबथोक बुझाएपछि आइमाईले त्यहाँ आउनुहुँदैन, जत्ति मानिस छन् उत्तिले काम गर्नुपर्छ; धपिएकाले त्यहाँ आउनुहुँदैन। जानो-जानी साहिनु पर्ने आए पनि ढुङ्गा-मुढ़ाले हानी लघार्नुपर्छ। काश्यप गोत्रको उच्चारण गरी देव-पितृहरूलाई दिन्छन्। सिधा उठाएको भोलिबेर बोलाई दिन्छन्। पर्वते ब्राह्मण-क्षत्रिय भएका ठाउँमा किरातिनीहरू नछुने भएको बार्दछन् र पर्वते ब्राह्मण नभएका ठाउँमा बार्दैनन्। किरातिनीहरूको ठूलो चलन के छ भने दिनमा वनमा गई घोराखरीको गेड़ा टिपेर तेल पेल्ने र रातमा चर्खामा धागो काती कपड़ा पनि बन्दछन्। घोराखरीको तेल लगी बजारमा रोटी [illegible]

...को ...या रोटी विक्री गर्छन्। किरातीहरू वर्षामा घर-खेती गर्छन्, हिउँद लागेपछि अंग्रेज बहादुरका मुलुकमा गई आरा काट्ने काम लिन्छन्। किरातीको दाह्री हुँदैन; जुँगा कसैकसैका भए पनि पातलो हुन्छ। रौं बँदेलका जस्ता ठाड़ा हुन्छन्; किरातीको ... माथिल्लो भाग आँखीभुइँका दोभानमनिको नाक थ्याच्च ... हुन्छ, दुप्पातिर सबै हुन्छ; ज्यादा अग्ला र ज्यादा ... पनि हुँदैनन्। डोरी बाटी एक विस्तासम्म रँगाएको हुन्छ; ...को टाँगा लगाई खुर्पा खुकुरी भिरी तछुवा चारपाटे आँख्ला ... लाठो लिई हिड्छन्। बूढा स्वास्नी अति हँसुली र सिक्री ...लाउँछन्; तरुनीहरू कं० रु०, अठन्नी, चवन्नीका माला (पटना) ...भनी लाउँछन्; हातमा सादा वाला चाँदी, काँचका लाउँछन्। हाट ...बजार, बाटो हिड्दा क्षत्रिय-ब्राह्मणले किरातीलाई कहाँ घर भनी ... खाँवा गाडेका ठाउँ भन्ने, बाबै भनी बोलाए तेरी आमा ... लगें भन्ने, दाज्यै भने तेरा बाबुसित कहिले मित लाएथें भनी ... निर्दुवाट उठान झिकी क्षत्रिय-ब्राह्मणलाई कुट्ने गर्छन्। ...तरुनी हाट-बजार गई नाच्ने, गीत गाउने, जाँड़ रक्सी खाने ...कुद गर्दागर्दै कोही मनैसमेत हुन्छन्। बाटामा किराती-...सित भेट भएमा खानाको घर कहाँ हो? मेरो घर पुसाई मजुवा ...? पुसाईका कति डाना छन्? खाना, मेरो एक डाना, तिम्रो ...साई चार डाना, पुसाई जेठो रहेछौ भनी जन्मको साल र ...को हिसाब नलिई बढ़ता छोरा-छोरी छन् भने उसैलाई जेठो ...मा सलाम गर्ने; धरबाट छोरी दशैंमा टिको लाउन आए आमा-...ले टीको लगाई आशीष दिएको हाँडीमा ढिडो र सुँगुरको पींडो ...लाइ नटुटोस् भनी भन्नुपर्छ। यो गरीब गुरुवाको हो। किरातिनी-...ले छोटा-छोटा घुँड़ासम्मका गुनिउँ लगाई कम्मरका पछाड़ि खुर्पा ...भिरी बालक हुनेले कोक्रामा बालकलाई हाली कोको बोकी र बालक ...नहुनेले डोको बोकी हिड्छन् जहाँ गए पनि।

## किरातीको क्रिया-कर्म

जङ्गीमा कर्नेल, कप्तान, लेफटेन, सुबेदार, वडादमो राईहरूको घाट लगी परलोक भएपछि दागबत्ती दिई जलाउँछन्। माझकिरात-तिर धनीका कसै-कसैका घाट लान्छन्। मुर्दा लाँदा दुइ बाँसको खट बाँधी कपड़ाले ढाकी कपड़ाको बार बारी मुखनेर भूल पारी सिरानमा र गोड़ामा काँसका थाल राखी गोड़ाका बुढीऔंला जोरी बेतको चोया र चाँदीका तारले बाँधी चाँदीको पाताले शिरदेखि २ कानतर्फबाट घुमाई च्युँड़ामा जोर्नुपर्छ। सानु-ठूलो हेरीकन हुन्छ। एक मानु चामल र एक पैसा कात्रामा हाली लानुपर्छ। दागबत्ती दिंदा त्यही पैसा चार दाम राखी दिनुपर्छ। मुर्दा लाँदा-पूल साँगू परेमा खुकुरी तरवार तीनफेर आकाशबाट पाताल गरी देखाई दाहिना बायाँ नचाई लानुपर्छ। दाह-कर्म गरिसकेपछि चिता पखालेर आफ्ना घरबाट लगेका एक तोंगवा जाँड़ राखिदिनुपर्छ। छातीमा राखेको मोहर, कम्पनी र शिरको पाउको थाल घरमा फिर्ता हुन्छ; त्यो शुद्धशान्तिमा चोख्याई खान-पीन हुन्छ। थोरैले दाह गर्दछन्, धेरै गाड़छन्। गाडेका स्थानमा एका मुगा (प्वालो) खोस्दा अन्न मिल्छ। कसैका बाकसमा हाली गाड़छन्। बिरामी परेका घरमा एकफेरा बन्दूक हान्नुपर्छ। सुनेका शब्दबाट बिरामी भाग्छ भनी जानुपर्छ; वहाँपछि दगुरादगुर हुन्छ। मलामीबाट फर्कदा आधा बाटोमा खाजा खुवाउनुपर्छ। मद खानेलाई मद र अरू जातलाई फलफूल, दही-मही, भुटेको मकैतक दिनुपर्छ। चार-पाटे रोल लाठो घरका बाटातर्फ गाड़्नुपर्छ, माथि फुर्को पारी। यसले आज यो-पित्र रहेछ भनी जानुहुँदैन, आफ्नु बोली बाहेक अर्काको बोली बोल्नु हुँदैन, बोलैनन् भनी लथारेको हो। कोही किरातीको मुर्दा पर्वतमा लगी अघि निजहरूले चलन गरे भित्रमा खाल्डो खनेर अलि-अलि रूँदै मुर्दाका साथै चिण्डो, खुकुरी,

गुलेली, मस्यांग्रा, हुक्का-चिलिमसमेत भात तिहुन दिई जाँडको भुजुङ्गो पनि भित्र हाली नली मुखमा लगाई सो आसन तोपी (पुरो) सात दिनसम्म नलीबाट जाँड़ हालदछन्। कोही किरातीका घरका करेसामा राखी गाडेका ठाउँमा चौतारो बनाई लीप-घस गरी राम्रो सुघर माथिबाट छप्पर हाली अखाडो समेत गर्छन्। कोही किराती मर्दा काठको बाकस भित्र हाली सो चेफाभित्र स्वविधिले राख्ने कुरा राखेर माथिबाट छाता जस्तो छादन हाली ठूला नदीमा बगाइ-दिन्छन्। निजहरूको काज क्रिया गर्दाको विधि मुख्य बिजुवा भन्ने ज्याँग्रि पुरेत जस्तो लासालाई ल्याएर कसैको मरेका तीन दिनमा, कसैको पाँच दिनमा, कसैको सात दिनमा र कसैको दस दिनमा शुद्ध हुन्छन्। विधि भनेको नियम के हो सो छैन। खाने-लाउनेको भने दस दिनमा पुण्याई गर्छन्। मरी चोखिने विधि बिजुवाले के गर्छ भने कुखुरो पोथी टपरीमा राख्ने धनु सिकासमेत हातमा रक्सी बिजुवाले मुर्दु पढी एक काँसको कटोरामा नून-तेल राखी क्रिया-पुत्रीहरू हकवालासमेतलाई छुन लगाउँछन्। हुने-खानेका ४५ दिन-भित्र दोहोरा मानिस हिड्ने बाटामा वर्षान्त गर्छन्; बाबु-आमाको नाम उच्चारण गरी ढुङ्गामा कुँदी नाम काटी चौतारो बनाएर औकात अनुसार मानिस जम्मा भई घरबाट निस्कँदा जाँड़ खाँदै बिजुवा धामी बस्तै स्थान-स्थानमा चिण्डो फोर्दै ढ्याँग्रो बजा-उँदै झ्याम्टा मारी सकी चौतारामा जाने र घर फर्की आउने गर्छन्। सक्नेहरू कसैका पाटी धर्मशालासमेत बनाउँदछन्। वर्ष-वर्ष दिनमा मुख्य गाउँको पगरी राई जो छ ज्येठका चण्डी पूर्णिमाका दिन त्यसका घरमा जम्मा भई ज्याम्टा, मजुरा, ढोल बजाएर मुख्य बूढा-हरू स्वधा-स्वधा, हो हो भनी नाची भित्र पसिसकेपछि उही हिसाबले पालोपाली गरी बुढादेखि नातिसम्म नाचेमा अरू गाउँ-का मानिसले जनैपिछे कोदालो, बञ्चरो, खुकुरी, कर्द, चुलेसी, तर-वार, हात-हतियार, एक-एक चिण्डो रक्सी लिएर घरमा जान्छन्।

आएका मानिसहरूलाई जात विशेषको खानेकुरादिएर बिदा गर्छन्। ठट्टा गरिएको दोष चेवेचा लागेछ भन्छन् ।

जिल्ला माझ किरात खोटाङकोट गाउँ-घर कोते चक्रप्रसाद भट्टराईजी वर्ष ३६ का र पाटन छाउनीका जमादार मानबहादुर राईजीले र ३ नम्बरका बोजुम र राईजीहरूले ठूलो मद्दत दिएर संवत् १९८३ सालमा नेपालबाट उतारी संवत् १९८५ साल ज्येठमा सम्पूर्ण मिलाएर पूर्ण पारी राई-किरातीको वंशावली जस्ताको तस्तो गरी नेपालमा कर्णेल, कप्तान, लेफ्टेन, सुबेदार, जमादार भै आएका र हिन्दुस्तानमा बहादुर सुबेदार आदि भएर बड़ा लड़ाईं जिती तकमा लगाएर नाम धन कमाई आएका फेरि जागीर नखाए पनि राई-किरातीलाई सुब्बा, किरातिनीलाई सुब्बेनी पदवी पाएका किराती जातिको ठूलो वंशावली चन्द्र-सूर्य जहाँसम्म रहन्छन् वहाँसम्म चल्नेछ ।

# किराती-राईको सवाई

सुन सुन पञ्चहो म केही भन्छू ।
राइका वंशको, सवाई कहन्छू ॥ १ ॥

राई लिम्बु किराती, एकै मनी ठान्नू ।
बनखण्डि बाघका, भाइ यिनी जान्नू ॥ २ ॥

पृथिवी र अकाश, जोरिएका दिन ।
पृथिवीमा गर्भ रह्यो, स्त्री जाति थीन ॥ ३ ॥

नीनामरेमा भन्ने, छोरी जन्मीछ ।
चन्द्रमाका कला झैं, बढी गईछ ॥ ४ ॥

जमानिमा वायु डाकि, गर्भवती भैछ ।
निनियामा छोरी ता, पैदा भई गैछ ॥ ५ ॥
उमेरमा यिनिले, आमालाई खोजिन् ।
कसोरी मलाई, पायौ भनि सोधिन् ॥ ६ ॥
गर्भस्थानमा वायु हुली, गर्भवती हुँदा ।
तिमिलाइ मैले पाएँ, दसमास छुँदा ॥ ७ ॥
भन्दा छोरी डाँडा गई, वायु डाकि ल्याई ।
आमालाइ थाहा दीइ, नजीकमा जाई ॥ ८ ॥
आमाले हावा वायु , तेरा बाबु भन्दा ।
छोरीलाइ पर्न गयो विद्याचरो धन्दा ॥ ९ ॥
वायुलाइ फकाइ आमा भन्छे नानी ।
तेरा पति शुक्र हुन् , आकाशका जानी ॥ १० ॥
जिगियो पंछिलाई, कलिया हाल्न ।
पठाउनू पर्दछ, बिद्या गरि छाड्न ॥ ११ ॥
हुन्छ भनी कलिया, जाँदा जाँदा तहाँ ।
अस्ताएछन् शुक्र ता, पश्चिम माहाँ ॥ १२ ॥
शुक्रका स्थानमा, बृहस्पति हुँदा ।
कलियाले बिद्याको, कुराकानी छुँदा ॥ १३ ॥
म ता राम्रो छैन, फिर्ता हुन्छु जान्न ।
भन्दाखेरि फकाएर, लागेछन् तान्न ॥ १४ ॥
हुन्छ भनि कलियाका, साथ लागि आए ।
बृहस्पति कुरूपका, भनि फरकाए ॥ १५ ॥

बृहस्पति रिसाई, पंछिसित जाहाँ ।
भन्न लागे फकंदा, सब कुरा ताहाँ ॥ १६ ॥
भाजी हालि न दिंदा, यस्तो भनिठान्छु ।
श्री सूर्यको प्रताप बढ़ाएर जान्छु ॥ १७ ॥
वहाँ पछि नदी नाला, सब सुकि जाला ।
झार पात बिलाई, बिग्रि जान्छ चाला ॥ १८ ॥
एही रुख टोट्कामा, जलुपात राखी ।
पीसाब गरि जान्छू, म ता आज राती ॥ १९ ॥
हाहाकार भएपछि, निनियामालाई ।
पुछरले छर्किदिनू, मूत्र तिमि जाई ॥ २० ॥
विधाता कहाँ छ, भनी आँखा खोल्छे ।
तेहि मूत्र पिलाउनू, अनिखेर बोल्छे ॥ २१ ॥
गर्भवती भएको, थाहा पाउँदीन ।
एति कहि बृहस्पति, त्यहीं भए लीन ॥ २२ ॥
तेसै गरे पंछिले, गर्भवती हुँदा ।
पैदा भए घेरै जाति, दशमास छुँदा ॥ २३ ॥
अरेलिका काँढा आदि, बानर बाघ जन्मे ।
तिनै निनियामाबाट किराती जन्मे ॥ २४ ॥
काँढा बानर् बाघका, किराती ता भाई ।
हुँदाखेरी बलिया, भएकालाई ॥ २५ ॥
काँढा बानरहरुले शक्तैन कोर्न ।
बाघ पनि सक्तैन, उसै भुँडि फोर्न ॥ २६ ॥

किरातीहरु हुन्, वनका राजा ।
यिनी खान्छन् मछली, जाँड रक्सी खाजा ॥ २७ ॥
यिनिहरुसित जो लड्नलाई जान्छन् ।
नशकेर मागल गाई माग्दछन् ॥ २८ ॥
दश जाति किरातिमा पाँचजाति जो हुन् ।
अलिकति व्यवहार भिन्नै गर्ने सो हुन् ॥ २९॥
बाँकि पाँच चाल चलन, गर्छन सुद्धा ।
तिर्नुपर्छ भेग्चाहरू दसपैसा जुधा ॥ ३० ॥
यिनीहरूको, जन्मभूमि, अघिको मान्नू ।
सिमाङ्कढ वाराह-क्षेत्र भनि जान्नू ॥ ३१ ॥
वाराह क्षेत्रका, वनभित्र माहाँ ।
वनखंडि नाथको, धुनि छ ताहाँ ॥ ३२ ॥
येसै उल्ले वनखंडि, बाघका भाई ।
भनेका हुन् सबैले किराती लाई ॥ ३३ ॥
यो कुरा बहुतै, ठीक हुन जान्छ ।
किरातिको काश्यप, गोत्र कहिन्छ ॥ ३४ ॥
नेपालमा पशुपति, देखि तल भारी ।
किरातीश्वर, छन् वागमती पारी ॥ ३५ ॥
किराती देवता, बुझ्कि लिनु पर्छ ।
किरातीश्वरको नाउँ लिने तर्छ ॥ ३६ ॥
किरातीहरु छन् सबमाका शूरा ।
यिनीका अगाडिमा अरु भारे भूरा ॥ ३७ ॥

नेपालमा कर्णेल, कप्तान हुन्छन् ।
लेप्टेन, सुबेदार गह्रि गह्रि घुम्छन् ॥ ३८ ॥
पाटनका छाउनिमा जङ्गि राई बस्छन् ।
दिल्ली बजारतिर पनि यिनीहेरु रहन्छन् ॥ ३९ ॥
हिन्दुस्तान पल्टनमा, तक्मा लाइ घुम्छन् ।
राई बहादुर भई सुबेदार हुन्छन् ॥ ४० ॥
हनुमान ढोकादेखी, पूर्व भोज पूर ।
यसैलाई भन्दछन् पूर्व चार नम्बर ॥ ४१ ॥
किरातको माझ पर्दा माझ किरात भन्छन् ।
चामलिङ् र वनतावा, राई रहन्छन् ॥ ४२ ॥
दूधकोशीदेखि पूर्व अरुण कोशी पश्चिम ।
चुरे महाभारतदेखि, उत्तरको हिम् चीम ॥ ४३ ॥
सिमाना भोटदेखी, दक्षिणको ठाम ।
बुझि लिनु पर्दछ, माझ किरात् नाम ॥ ४४ ॥
दूध कोशी पश्चिम, तामा कोशी पूर्व ।
ओल्लो किरात् भन्दछन् नाउँ छ अपूर्व ॥ ४५ ॥
रुजाली राई आदि यहीं नै रहन्छन् ।
नौलखा राइ छन् भनि सबै भन्छन् ॥ ४६ ॥
अरुण बादशाह, देखि पूर्व गन्छन् ।
मेचीदेखि पश्चिम पल्लो किरात भन्छन् ॥ ४७ ॥
लिम्बूहरु बसेका याहीं छन् सारा ।
तल माथि परेमा आउँछन् धारा ॥ ४८ ॥

राईका जातमा लिम्बू छन् भारी ।
तिनुमुरिको धोक्रो बोकी हिंड्छन् खोला तारी ॥ ४९ ॥
यिनी भन्दा बलिया, अरु कोहि छैनन् ।
कसैलाई यिनीहरू, गन्दै गन्दैनन् ॥ ५० ॥
यिनीलाई समाउन कस्ले सक्छ ओ हो ।
वनको बाघ पनि कुकुर हुन्छ जो हो ॥ ५१ ॥
दिनु हुन्न यिनि लाइ, जुँघाको ताप ।
रिसाउँदा हुन्छन् गहुमन साप ॥ ५२ ॥
बाबू भनि बोलाए रिसले चढ्ने ।
तेरी आमा कहिले मैले लगें भन्ने ॥ ५३ ॥
दाज्यै भनि पुकारे तेरा बाबु सीत ।
मित कैले लाएँ र भन्ने यिनको रात ॥ ५४ ॥
साइनू लाएर बोलाउनु हुन्न ।
झगडाको निउँ झिकी लाग्छन् बाटो थुन्न ॥५५॥
स्वास्नीलाइ सुब्बिनी लोग्ने लाइ सुब्बा ।
भन्नु पर्छ हुँदैन, भन्न लाइ बूवा ॥ ५६ ॥
काँहो घर भनी सोधे, खाँबा गाडे ठाम्मा ।
भनिकन हिंड्दछन् , आफ् आफ्नु काम्मा ॥ ५७ ॥
राइलाइ चलाउने, आफै चित खान्छन् ।
चारपाटे तछुवा, लाठाले हान्छन् ॥ ५८ ॥
राइसित राय लिई, काम गर्न पर्छ ।
वहाँ पछी आफनू दुःख सबै टर्छ ॥ ५९ ॥

सिंह भन्नु किराती राई हुन जान्नू ।
राईलाई सानुतीनु कत्ति नठान्नू ॥६०॥
आँखो भुइँ बिचको नाकको मूल ।
थेच्चो हुन्छ बहुतै राईको कूल ॥६१॥
जुँघा हुन्छन् पातला किता हुँदैहुन्न ।
हुँदैन दाह्री किरातिको चिह्न ॥६२॥
बँदेलको जस्तो ठाडो रउँ हुन्छ ।
किरातिको एहि चिह्न अर्को भन्नु कुन्छ ॥६३॥
गहुँगोरा हुन्छन् तिनै किरातका ।
वल्ला दुवै किरातका हुन्छन् मध्यमैका ॥६४॥
पल्ला किरातका अलि अग्ला हुन्छन् ।
मोटाघाटा पहल्मान् जस्ता इनी घुम्छन् ॥६५॥
बाहाँकटे भोटा टोपी खाँडीका लाई ।
बाँध्छन् पटुका फुरका खसाई ॥६६॥
खुकुरी खुरपा कम्मरमा भिर्छन् ।
चारपाटे तक्षुवा जंगीलाठो भिर्छन् ॥६७॥
स्वास्नी जति बूढीले हँसुलि र सिक्का ।
लगाएर हिंड्छन् नगरेर फिक्री ॥६८॥
कम्पनीका अठन्निका चउन्निका माला ।
तरुनी लाउँछन् काँच चाँदी बाला ॥६९॥
मामा-छोरी फुपु-छोरीसित बिहा हुन्न ।
गोडा धुन्छन् इनका धर्म अन्न-धुन्न ॥७०॥

दाज्यू मरे भाउज्यू देवरले राख्ने ।
हकजस्तो देखिन्छ अरुमा नआँक्ने ॥७१॥
कलिया हालीवरी विह्वा पनि गर्छन् ।
चोरी गरी विह्वा गरे फासछ भन्छन् ॥७२॥
चोरी विह्वा गरे पनि ससुराललाई ।
दैदस्तुर दिनुपर्छ दुवै जना जाई ॥७३॥
गरोपले गीत गाई हाट बजारबाट ।
विह्वा गरी ल्याउँछन् गरि ठुलो आँट ॥७४॥
पाङ्दुरे कोदाको जाँड रक्सी पाई ।
अति शुद्ध मान्छन् देव-पितृलाई ॥७५॥
कोदाको जाँड नभै काम बन्द हुन्छ ।
राइलाइ कोदैका जाँडको गुन्छ ॥७६॥
सन्तान् धेरै हुनेलाइ जेठो भन्छन् ।
बजारमा सलाम उसैलाइ गर्छन् ॥७७॥
सन्तान् कम्ति हूने जेठा राईलाई ।
सलाम गर्दैनन् कान्छो जानि भाई ॥७८॥
किरातीहरुको बुझि लिनु पर्ने ।
धेरै थोक अरु छन् कहाँतक गर्ने ॥७९॥
किरातिका वंशको पुरानो रीत ।
नछोडी बनाएको खुप मञ्जासीत ॥८०॥
ठट्टा गरि आएका दोषलाई राई ।
चेवेवा लागेछ भन्दछन् जाई ॥८१॥

राइका छोरी-बेटी पर सर्दा खेरी ।
पर्वते गाउँमा बार्दछन् हेरी ॥८२॥
छोरीको नामकर्म तिन दिन्मा गर्छन् ।
छोराको नामकर्म चार दिन्मा गर्छन् ॥८३॥
छोरीको पास्नी ता पाँच मैह्नामा हुन्छ ।
छोराको ता पास्नी छ मैह्नामा हुन्छ ॥८४॥
टपरिमा विधिसित पदार्थ राख्छन् ।
मामाले पोशाक बटुको दिन्छन् ॥८५॥
रुपियाँ मोहरले मुख पुछ्नु पर्छ ।
छैन भने पैसाले मुख छुनु पर्छ ॥८६॥
बजाएर बाजा सक्नेले गर्छन् ।
नाच कीर्तनहरु पनि गर्नु पर्छ भन्छन् ॥८७॥
गोठमा कि आँगनमा छेओर गर्छन् ।
बाहुनले कहेका विधि सब मान्छन् ॥८८॥
सिधा र दक्षिणा आफ्ना बाहुनलाई ।
दिइ आफु भतेर खान्छन् सब जाई ॥८९॥
जन्मदा र घटता बाहुनले दिन्छन् ।
गउँत खाइ घरको काम अनि गर्छन् ॥९०॥
बाहुनले जुराएको नाम चाहीं जो हो ।
चिह्नामा लेखिएको जानिलिनु सो हो ॥९१॥
बोलाउने नाउँ ता मघौवाले राख्छ ।
चिह्नाको नाम ली, ज्योतिषिले हेर्छ ॥९२॥

पाखुवा चढ्ने चैत वैशाख माहाँ।
कुलका देवताको पूजा हुन्छ ताहाँ ॥६३॥
बसेंनि गर्नु पर्छ चलि दिंदा खेरी।
घुँगुर र कुखुरा, बोके माछा हेरी ॥६४॥
दिनु पर्छ चलेको सोधि बूढ़ासीत।
नछोडी गर्नु पर्छ अघिको रीत ॥६५॥
सोहोर सरादमा विधि गर्नु पर्ने।
बुझि लिनु राइले आफुले गर्ने ॥९६॥
धैयाका चामल र चिउरा फेरि।
लिनु नयाँ अदुवा नभै हुन्न हेरी ॥९७॥
पाकदुरे कोदाको जाँड चिण्डा भरी।
चाहिन्छ कहेंका फुल थरि-थरी ॥९८॥
केराका पातमा यी राख्नुपर्छ यीजो।
कुड़ा भन्ने गर्नुपर्छ चली आयो हीजो ॥९९॥
आइभाईहरूले हुन्न त्याहाँ बस्न।
थपिए मानिसले हुन्न त्याहाँ पस्न ॥१००॥
जति छन् उनैले काम गर्नु पर्छ।
अरु आइ गरे भने आफुलाई पिर्छ ॥१०१॥
जानी जानी साहिनु पर्ने आए जहाँ।
ढुंगाले र मुढाले हान्नु पर्छ ताहाँ ॥१०२॥
काश्यप गोत्रको उचारण गर्नू।
देवता र पितृलाई अन्न दिइ तार्नू ॥१०३॥

सिधा उठाएको भोलिवेर डाकी।
दछिना समेत नै दिनु पर्छ राखी ॥१०४॥
अनिखेर सराद्धको भोज हुन्छ ताहाँ।
किरातिको चालचलन् लेखिदिएँ याहाँ ॥१०५॥

—:०:—

## विवाह प्रकरण

स्मृत्यर्थसारे-इत्थं सगोत्र सम्बन्धे विवाहविषये स्थिते।
यदि कश्चित् ज्ञानतस्तां कन्यां मूढोपगच्छति ॥
गुरुतल्पव्रताच्छुध्येद्गर्भस्तत्रोऽन्त्यतां व्रजेत्।
भोगतस्तां परित्यज्य पालयेज्जननीमिव ॥
अज्ञानादैन्दवैः शुद्धेत् त्रिभिर्गर्भस्तु कश्यपः।
—बृहद्यमः

—एवं सापिण्डेपि। —तिथितत्त्वे बौद्धायनः।

सपिण्डापत्यदारेषु प्राणत्यागे विधीयते।
सपिण्डां सगोत्रां चेदज्ञानादुपगच्छेन्मातृवदेनां बिभृयात्।

सगोत्री कन्याका साथ विवाह गरेको शुद्धि गुरुपत्नी गमन गरेको प्रायश्चित्त नै गर्नुपर्दछ। उसबाट उत्पन्न भएको गर्भ ( बालक ) चाण्डाल हुन्छन्। तीसित भोग त्याग मात्र नगरी महतारी समान पालन गर्नुपर्दछ। अज्ञानले विवाह भई सन्तान भए ता तीन चान्द्रायण व्रत गर्नाले गर्भको शुद्धि हुन्छ। यही प्रकार सपिण्ड सात पुस्ता भित्रकी कन्या विवाह भएमा प्राण परित्याग गर्नुपर्दछ। तिथितत्त्वमा बौधायनको वाक्य छ—नजानीकन सात पुस्ता भित्रकी कन्या, सगोत्रकी कन्या विवाह गरेको भए महतारीका समान पालना गर्नुपर्दछ।

परिणीय सगोत्रान् तु समानप्रवरान् तथा ।
त्यागंकु र्यात् द्विजस्तस्यास्ततश्चान्द्रायणं चरेत् ॥
समानप्रवरां कन्यामेकगोत्रामथापि वा ।
विवाहयति यो मूढस्तस्य वक्ष्यामि निष्कृतिम् ॥
उत्सृज्य तां ततो भार्यां मातृवत् परिपालयेत् ॥ –वशिष्ठः

सगोत्री कन्यासित विवाह भए त्यसलाई भोग नगरेर आमालाई पाले झैं पाल्नुपर्दछ ।

छोरी क्षत्रियकी विहे गरिवरी, बाहूनलाई दिनू ।
बाहुनले पनि छोरि पाइ विधिले खास् बाहुनैमा दिनू ॥
सात् पुस्ता यहि रीतले बिति गए, त्यो सातऊँ क्षत्रिणी ।
हुन्छे ब्राह्मणि भन्दछन् ऋषिहरू, पाराशरादी पनि ॥
यस्ता बात्हरु धर्मशास्त्रतिर जो, खोजे बहुत् मिल्दछन् ।
एकै गोत्रमहाँ विवाह्वरि हुने पाइन्न काहीं वचन् ॥
एकै गोत्र र एक जो प्रवरमा, वीह्वा नजानी गरे ।
कन्या छोडि कपाल खौरि अनि प्रायश्चित्त गर्नू अरे ॥

श्री चन्द्रायण गर्नु पर्छ बुझनू, जानी विवाहा गरे ।
श्री चान्द्रायण गर्नु दोवर अनी, राम् राम भन्नू हरे !
कन्याले पनि गर्नु पर्दछ विधी, आधा पतीका जती ।
आमा झैं गरि पाल्नु पर्निकन ती, हुँदैन छन् रती ॥

एकै गोत्रमहाँ नजानि भुलले, वीह्वा गरी भोग् गरे ।
दो चान्द्रायण गर्नु पर्छ बढ्ता, फेरी नछन् भरे ॥

जानी जानि बिहे सगोत्रिहरुमा, भै भोग भैगो जहाँ।
घेरै काल त गर्नु पर्दछ बढ़ी, चान्द्रायणादी तहाँ॥
गुरूमा सित भोगदा त गरने, चान्द्रायणादी अति।
प्रायश्चित्त छ जो छ वर्षतकको, त्यै गर्न भन्छन् कति॥

एकै गोत्रविषे बिहे नबुझि भै, सन्तान जन्मेमहाँ।
चान्द्रायण् गरि पतिसीत रहनू, पर्दैन छोड्नू तहाँ॥
काश्यप् गोत्र भनेर जान्नु तिनका, सन्तानहेरू जति।
चाण्डाल् हुन्छन जानि जानि त बिहे, भै जन्मिएका तति॥
जातैदेखि पतीत भै ति गएका, तिन्का त छोरी अनि।
बाहूनीसित शूद्रबाट भएका, सन्तानलाई पनि॥
एकै गोत्रविषे बिहे गरि भएका पुत्रलाई भयो।
यी चाण्डाल भनी यमस्मृतिविषे, पाइन्छ लेखीयको॥
यो मैले बुझ धर्मशास्त्रहरुको, सारांश लीई मनें।
जे जे हुन्छ हवोस गर्दछु भने, गर्दैन कोही मने॥
तत्सत् दान दि लीनु हुन्न कहिल्यै आज्ञा सगोत्रीमहाँ।
जूठो लाग्छ सगोत्रिमा अलिकती, वीचार गर्नू यहाँ॥
एकै गोत्रविषे पुरोहित भई, शय्या कसोरी लिनू।
ली चर्णोदक श्राद्धमा कसरि पो, टीका लगाई दिनू॥
तस्मात् पण्डितले कदापि नगरोस् आज्ञा सगोत्रीमहाँ।
कन्यादान दिनू लिनू र पुजनू छोडी दिनू है तहाँ॥

# मातृगोत्रनिर्णयः (शातातपः)

मातुलस्य सुतामूढ्वा मातृगोत्रां तथैव च ।
समानप्रवरां चैव गत्वा चान्द्रायणं चरेत् ॥
सगोत्रां मातुरप्येके नेच्छन्त्युद्वाहकर्मणि ।
जन्मनाम्नोरभिज्ञातेऽप्युद्वहेदविशंकितः ॥

इति व्यासोक्तेरज्ञातनामत्वेन सगोत्रत्वदोषस्तथापि नेदं कलौ प्रवर्तते

गोत्रान्मातुः सपिण्डाच्च विवाहो गोवधस्तथा ।

इति कलिवर्ज्यत्वोक्तेः इदं मातृगोत्रवर्जनं माध्यन्दिनीयानामेव । मातृगोत्र माध्यन्दिनीयानामपुत्रायाश्चेति सत्याषाढोक्तेरिति कश्चिन्महाराष्ट्रकल्पितवान् तन्निर्मूलम् । अन्यथा गुर्जरादेः कातियस्य कुतो न निषेधः । अतएव प्रवरमञ्जरीकारः दोषस्यातिगुरुत्वात् सर्वेषां मातृगोत्रं वर्ज्यमिति । यत्तु गुर्जरादीनां माध्यन्दिनीयानामप्याचरणाच्च ।

एकस्मिन् प्रवरे तुल्ये मातृगोत्रे वरस्य च ।
तमुद्वाहं न कुर्वीत सा कन्या भगिनी स्मृता ॥

इति मातृकुले प्रवरचिन्तनमुक्तम् । तदासुरादिविवाहोढापरमिति-दिक् । विस्तरस्तु ग्रन्थान्तरे ।

माताका गोत्रकी कन्या अथवा आफ्ना गोत्रकी कन्या अथवा आफ्ना प्रवरकी कन्याका साथ गमन गरे चान्द्रायण व्रत गर्नुपर्दछ । कोही आचार्य माताका गोत्रको कन्याका साथ विवाह हुँदैन भन्छन् । जन्मको नामको ज्ञान छैन भने व्यासोक्तिका अनुसार सगोत्रको दोष मान्दैनन् । माताका गोत्र र सपिण्डको कन्याका साथको विवाह र गोवधको पनि निषेध छ । माताका गोत्रको परित्याग माध्यन्दिनीय शाखावालाको मात्र हो । अतः सत्याषाढको यो उक्ति कुनै

महाराष्ट्रीले कल्पना गरेको हो, परन्तु निर्मूल छ। नत्र ता गुर्जर (गुजराती) हरूको र कातीयहरूको निषेध किन भएन ? यसै कारण प्रवरमञ्जरीका कर्ताको मत छ कि कष्ट अधिक हुनाले माताको गोत्र सबैलाई निषेध छ। कसैले माध्यन्दिनीय शाखावाला गुर्जर महाशयहरूका आचारले यो कहेको हो, एकै प्रवरको समानता हो। वरकी माताको गोत्र छ भने ता त्यस कन्याका साथ विवाह नगर्नु, कारण ती कन्या भगिनी हुन्छिन्। माताका कुलमा प्रवरको विचार त्यस कन्याका विषयमा सम्झनुपर्दछ जो आसुर आदि विवाहबाट विवाह गरेकालाई हो, अन्य ग्रन्थहरूबाट जान्नुपर्दछ।

अन्यासु पितृगोत्रासु मातृगोत्रगतास्वपि।
परदारेषु सर्वेषु कृच्छ्रं सान्तपनं चरेत्॥—यमस्मृतिः

माता-पिताका गोत्रकी स्त्री र परस्त्री या सबका साथ गमन गर्ने सान्तापन कृच्छ्र गर्नाले शुद्ध हुन्छ।

कुमारीसम्भवास्त्वेकः सगोत्रायां द्वितीयकः।
ब्राह्मण्यां शूद्रजनितश्चाण्डालस्त्रिविध स्मृतः॥—व्यासस्मृतिः

कुमारीबाट १, सगोत्री कन्याबाट २, ब्राह्मणीमा शूद्रबाट पैदा भएका ३। यी तीनै चाण्डाल हुन। यिनीहरूलाई देखे सूर्यदर्शन गर्नाले शुद्ध हुन्छ भनी व्यासस्मृतिको १०।११ श्लोकमा लेखेको छ। एकै गोत्रमा विवाह नगर्नू।

# कन्यादानाधिकारी

पिता पितामहो भ्राता सकुल्यो जननी तथा।
कन्याप्रदः पूर्वनाशे प्रकृतिस्थः परः परः॥ —याज्ञवल्क्य

पिता नभए पितामह, नभए भाई र सपिण्डभित्रका कोही नभए आमाले कन्यादान गर्नू ।

विष्णुं जामातरं मन्ये तस्य कोपं न कारयेत् ।
अप्रजायां तु कन्यायां नाश्नीयात् तस्य वै गृहे ॥
ब्रह्मदेयां न वै कन्यां दत्वाश्नीयात्कदाचन ।
अथ भुञ्जीत मोहाच्चेत् पूयाशी नरके वसेत् ॥

अपरार्कमा आदित्यपुराणको वचन छ कि ज्वाइँलाई म विष्णुस्वरूप मान्दछु, उनका उपर क्रोध कदापि गर्न उचित छैन । जसका सन्तान भएका छैनन् त्यस कन्याका घर भोजन गर्न निषेध छ । जो अज्ञानले खान्छ, त्यो पूय जाम नरकमा जान्छ । सन्तान भएपछि खान हुन्छ, दोष लाग्दैन ।

छोरीका घर खानु हुन्न यउटा सन्तान केही नभै ।
प्राजापत्य गरोस पानि पियको मात्रै पनी भूल भै ।
भारी पाप छ, पाप छैन यउटा सन्तान भै खायको ।
यो हो पाकलकारिका र अनि जो आदित्यपूराणको ॥

ब्रह्मवै–एतीलाइ कदापि छोरि नदिनू दीए त पापी भयो ।
यो जो हो ऋषिवाक्य हो नजर दी हेरीलिनूहोस यो ॥
ज्ञानीलाइ दरिद्रलाइ र अती रीसाहलाई अनि ।
मूखाले खुनिलाइ पापि र बुढा पट्मूर्खलाई पनि ॥
रोगी भो जडलाइ निन्दित नपुंसकूलाइ लाटाकन ।
अन्धालाइ पनी हुँदैन बहिरालाई नदीनू भन ॥

जो की ईलमहेरु केहि नहुनेलाई नदीनू रती।
एकै गोत्रमहाँ नदीनु जनले दोने पशू हो अति॥
अकाशे दुभि रोग कुष्ट भयकालाई नदीनू त यो।
येतीलाइ नदीनु छोरि त दिए त्यो ब्रह्मघाती भयो॥
गूणी, पण्डित, सन्त, वैष्णवहरू वैदीकलाई दिनू।
दीनू छोरि जवान सज्जनहरूलाई दि नाता लिनू॥
जस्ले दिन्छ मलाइ येति रुपिया उस्लाइ दिन्छू भनी।
कन्या बेचि बिहे गरेर बढ़ता खाने त पाजी पनि॥
त्यो ता पुग्दछ कुम्भिपाक नरकै आफ्ना यकै आँतको।
कन्याको गुहू-मूत खाइरहला छोरी-ब्यचा पातकी॥
कौवाले, कृमिले लुछी नरकमा घुम्नेछ घेरै गई।
चौधै इन्द्रतलक् घुमीसकि अनी रोगी कसाई भई॥
मासू बेचिरहन्छ रात-दिन जो पापादिका भोगको।
फेरी भोगि रहन्छ यो वचन जो हो ब्रह्मवैवर्तको॥
कश्यप–बीह्या गर्दछ छोरिको पुरुष जो दोहोरि खर्चें लिई।
एकृता आफइ पाप भोग्दछ ठुलो कै गर्नु दोसो दिई॥
त्यो कन्या पनि पति हुन्न पतिकी चौता र पुर्खा सब।
खाँदैनन् दियको कमारि भइगै भन्छन् ऋषी कश्यप॥
मनु– आफूले त छुँदै नछोइ धन छोरीका निर्म्ता लिए।
दोषादीहरु लाग्दैन मनुको आज्ञा छ लीनू दिए॥

कात्यायन–जातीभाट पतीतलाइ बहुलालाई थकै गोत्रमा ।
छारेरोगि दरिद्र मूर्ख बहिरा अन्धादिका मध्यमा ॥
टाढामा रहने‡ र कुष्टि भयका वृत्ती नहुँने अनि ।
शूरालाइ र मोक्ष-मार्गतिरको बाठो लिनेमा पनि ॥
कन्यादान नदोनु ति तेइहरुमा ज्ञानीहरूले भनी ।
यो कात्यायनको त उक्ति बुझिली कन्या दिनू लौ भनी ॥

वशिष्ठ– कुलशीलविहीनस्य षण्ढादि पतितस्य च ।
अपस्मारि विधर्मस्य रोगिणां वेषधारिणाम् ॥
दत्तामपि हरेत् कन्यां सगोत्रोढां तथैव च ।

कुल-शील कस्ती भएका, नपुंसक, पतित, छारे रोगी, धर्म कत्ति नभएका, रोगी, बहुरूपीलाई र एकै गोत्रमा दिएको कन्या पनि हरेर लिनू, नदिनू ।

अद्भिर्वाचा च दत्तायां म्रियते यदि वै नरः ।
न च मन्त्रोपनीता स्यात् कुमारी पितुरेव सा ॥

जल अथवा वचनले वाग्दान दिएको कन्या यदि वर मन्यो भने वेदमन्त्रले विवाह नभएको हुनाले ती कन्या बाबुको हुन्छिन् । नारद मुनिले कहेको छ—कन्याको विवाह भई संसर्ग भएको छैन भने तिनको फेरि विवाह गरिदिनू । ती कन्या समान हुन्छिन् ।

यम– विद्या रूप कुलीन शील धन भो ऊमेर बन्धू हुने ।
यस्ता जो वर सातई गुण पुगेकालाइ कन्या दिने ॥

‡ विद्वान् घरमा सम्पति छ भने टाढा दिन हुन्छ भनी लेखेको छ ।

छोरीको घर बिग्रँदैन यमको आज्ञा छ जानी लिनू।
नाडी आदि लि अष्टकूटहरुको बाधा नपारी दिनू॥

दूरस्थानामविद्यानां मुमुक्षूणां गरीयसाम्।
शूराणां निर्धनानां च नदेया कन्यका बुधैः॥

बुद्धिमान् मनुष्यले टाढा रहनेलाई, मूर्खलाई, विरक्त भएकालाई, अलि ठूलालाई, बहुतै लड़ाको शूरो र दरिद्रलाई पनि कन्या नदिनू।

नातिदूरे न चासन्ने अत्याढ्ये चातिदुर्बले।
वृत्तिहीने च मूर्खे च षट्सु कन्या न दीयते॥

धेरै टाढा घर हुने, नजीकै घर हुने, अत्यन्त धनवान्, दुर्बल, जीविकाहीन र मूर्ख यी छओटालाई कन्या नदिनू।

मनुवाक्य—

मनुजीको आज्ञा छ कि स्त्रीका सम्बन्धमा यी १० कुलहरू छोड्नुपर्दछ। नित्य-नैमित्तिक क्रियाहीन १, परिवाररहित २, वेदको अध्ययन नगरेका ३, शरीरमा रौं ज्यादै भएका ४, अर्श ( अलकाई ) भएका ५, क्षयरोगी ६, मन्दाग्नि रोग भएका ७, छारेरोगी ८, दाद-रोगी ९, कुष्ठरोगी १०। यी दस रोगले रहित भएका कुलको छोरी विवाह गर्नू। फेरि जसको नक्षत्र, वृक्ष, नदी, पर्वत, पक्षी, सर्प आदि भयङ्कर नाम छ त्यस कन्यासित र मूल नक्षत्रमा जन्मेकी कन्यासित पनि विवाह नगर्नू। तथा विवाह सम्बन्धी वर्ण, वैश्य, नाडी, ग्रहहरूका मैत्री आदि ज्योतिषीहरूबाट विचार गराउनू।

## विवाह निर्णय

कन्याका विवाहका समयमा ज्योति र्निबन्धमा यो कहेको छ कि ६ वर्षसम्म कन्याको विवाह गर्नुहुँदैन, किनभने दुइ वर्ष तक म,

दुइ वर्ष अग्नि उसको भोग गर्दछन्। राजमार्तण्डको मत छ कि अयुग्म वर्षमा विवाह गरेकी कन्या दुराचारिणी हुन्छन्। यसकारण गर्भका वर्षदेखि लिएर जोर वर्षमा विवाह गर्नाले कन्या पतिव्रता हुन्छे। बिजोर वर्ष जन्ममासदेखि तीन मासपछि जोर वर्षमा पनि तीनै माससम्म वात्स्य आदि सन्त विवाहको शुद्धि कहन्छन्। पराशर माधव ग्रन्थमा यो कहेको छ कि जन्म अथवा गर्भदेखि पाँचौं वर्षमा पुत्रको यज्ञोपवीत गर्नुहुन्छ।

सम्बन्धतत्त्वमा यमको वाक्य यो छ—

> कन्या द्वादशवर्षाणि याऽप्रदत्ता वसेद् गृहे।
> ... ... ... सा कन्या वरयेत्स्वयम् ॥

बाह्र वर्षसम्म विवाह नभई कन्या पिताका घर रही भने त्यस कन्याले आफै स्वयंवर गर्नु भनी भारतमा कहेको छ। तीस वर्षको वरसँग सोह्र वर्षकी कन्याको विवाह गर्नु, यसैप्रसा गर्नाले धर्मबाट पतित हुन्छ। राजमार्तण्डमा यस्तो लेखेको छ— ग्रहण, युद्ध अथवा पितृहरूको प्राण सङ्कटमा अत्यन्त उमेर पुगेका कन्याको विवाह गर्नुहुँदैन। यस वाक्यमा चकार पढ्नाले यो पनि प्रतीत हुन्छ कि अत्यन्त बालिकाको विवाह नगर्नू। मनुको वचन छ कि तीस वर्षका वरको विवाह गरे हुन्छ। चाँडै गर्नाले धर्मच्युत हुन्छन्। २२।१६ वर्षकी कन्यासित पनि विवाह गर्ने विधि छ, किनभने पराशर माधवका ग्रन्थमा बौधायनले यो कहेको छ कि रजस्वला भएपछि अनन्तर कन्याले तीन वर्षसम्म पिताको बाटो हेर्नू। वैद्यशास्त्र वाग्भटमा १६ वर्षकी कन्याको २० वा २५ वर्षका पुरुषसित विवाह गर्नाले वीर, बुद्धिमान् र पराक्रमी छोरा जन्मन्छन्। कम वर्षमा कन्यासित विवाह गर्नाले सन्तान भएका पनि मर्छन् र

बाँचे पनि अल्पायु हुन्छन्, धेरै बाँचे पनि कुफी दरिद्र झैं हुन्छन्। तस्मात् अत्यन्त बालासित गर्भाधान नगर्नु भन्ने वाग्भटको मत छ। कलियुगमा जेन तेन ५०।६० वर्ष आयु देखिन्छ। अब के भन्ने युग हेरेर विचार गरी चोख्युपर्छ। शास्त्रले रजस्वला नभै पतिले छुन, बेकाइदा गर्न हुँदैन भनी ठोकेको छ। अतः १३, १४, १५ वर्ष नभै पर सदैनन्। विवाह गरेर त्यसपछा रातैमा सङ्गम गर्नु भन्ने प्रमाण भएको भए हो, सो ता छैन। रजस्वला भएपछि मुहूर्त हेरी गर्भाधान गर्नुपर्छ। उसै शास्त्रलाई दोष दिन पाइन्न। विवाह गरी राख रजस्वला भएपछि विधिसित कर्म गर, मोटाघाटा हुन्छन्।

ब्राह्मणको स्वयंवर गर्नु हुँदैन, विधिसित गर्नुपर्छ।

चम्के[1] दूइ गरी विवाह गरनू हूँदैन कस्तै गुनी।
सान्है दुःखि भए र सङ्कट परेमा हुन्छ भन्छन् मुनि॥
यौटैलाइ बिहा गरेर दुइटी हूँदैन छोरी दिनू।
यौटी गै अरको बिहे गरिदिए त्यो हुन्छ शाली लिनू॥
एक आँते दुइ भाइलाइ दुइटी हूँदैन कन्या दिनू।
सालभरदेखि उता र पर्वत नदी बिच्मा भए ता दिनू॥
एक् पेटे दुइ पुत्र पुत्रिहरुको वर्षै यतामा जहाँ।
व्रतुबन्धै व्रतबन्ध गर्न र बिहे बीहा नगर्नू तहाँ॥
आमा बेग्लइ छन् भने छ महिना भित्रै बिहा दूइको।
व्रतुबन्धै व्रतबन्ध हुन्छ गरनू लाग्दैन दोषादिको॥
झड्केला दुइ पुत्रको त बरतौन् एकै दिनैमा गरे।
बेग्लै मण्डप गर्नुपर्छ गरनू आखीरि सान्है परे॥

---

१ दुइ चम्के भनेको तिम्रा छोरालाई मेरी छोरी दिन्छु, मेरा छोरालाई तिम्री छोरी देऊ भनी साटो गरी विवाह गर्नू।

छोराको गरि छोरिको नगरन् बीह्या छ मैह्ना यता ।
छोरीको गरि पुत्रको गरन ता होला कि भन्छू मता ॥
भाई भाइ र बैह्नि बैह्नि अथवा भाई र बैह्नीजिको ।
ऊही दीन उ यज्ञमा त वरतौन् हूँदैन बीह्या निको ॥

यौटै मण्डप वेदिमा सहित भै जुग्ल्याहरूको तहाँ ।
वर्तौन्नादि बिहे गरे अतिशुभो त्यो हुन्छ गर्न यहाँ ॥
एक् आँते दुइ पुत्रको र दुइटी छोरीहरूको बिहे ।
पुत्रीको गरि पुत्रको नगरन् वीशेष् छ मैह्ना बिहे ॥

तिन् पुस्तातकका त भाइहरुले तिन्टा शुभोकाम् पनि ।
छै मैह्नातक गर्न हुन्न सबले बिग्रन्छ पक्का भनी ॥
ठूलो१ काम गरी नगर्नु लघु काम् भित्रै छ मैह्ना अरू ।
बीहे भो व्रतबन्ध आदि त ठुल, वास्तु प्रतिष्ठा लघु ॥

छोराको वरतौन् गरी छ महिना भित्रै बिहे पुत्रको ।
गर्न पर्छ बिहे गरेर वरतौन्हेरू पनी सूतको२ ॥
संवत्३ बीचमहाँ परे छ महिना भित्रै पनी सुन्नुभो ।
एक् आँत्का दुइको बिहे गरिदिन् आखीरिमा बुझ्नुभो ॥

---

१—व्रतबन्ध गरेर चूडा गर्नु हुँदैन, विवाह गरेपछि चूडा र व्रतबन्ध गर्नु हुँदैन । २—सुत भनेको छोरो । ३—यौटाको विवाह व्रतबन्ध माघमा या फागुनमा गरी अर्काको वैशाखतिर गरे हुन्छ, आखीर परेमा भन्ने यो अर्थ हो ।

# विवाहमा सपिण्डी र सगोत्रीको विचार

१. भुर्त्याल                २. रेग्मी

| | | | |
|---|---|---|---|
| भुर्त्याल | भुर्त्याल | रेग्मी | रेग्मी |
| तत्पुत्र | तत्पुत्र | तत्पुत्र | तत्पुत्र |
| भुर्त्याल | भुर्त्याल | रेग्मी | रेग्मी |
| तत्पुत्र | तत्पुत्र | तत्पुत्र | तत्पुत्र |
| भुर्त्याल | भुर्त्याल | रेग्मी | रेग्मी |
| तत्पुत्री | तत्पुत्र | तत्पुत्री | तत्पुत्री |
| सिग्देलनी | भुर्त्याल | मिश्रेनी | घिमिरेनी |
| तत्पुत्री | तत्पुत्र | तत्पुत्र | तत्पुत्री |
| रिजालनी | भुर्त्याल | मिश्र | ढकालनी |

३. सुवेदी                ४. लामीछाने

| | | | |
|---|---|---|---|
| सुवेदी | सुवेदी | खँदालनी | रूपाखेतिनी |
| तत्पुत्र | तत्पुत्र | तत्पुत्र | तत्पुत्र |
| सुवेदी | सुवेदी | खँदाल | रूपाखेती |
| तत्पुत्र | तत्पुत्र | तत्पुत्र | तत्पुत्र |
| सुवेदी | सुवेदी | खँदाल | रूपाखेती |
| तत्पुत्री | तत्पुत्री | तत्पुत्र | तत्पुत्र |
| न्यौपानेनी | विडारिनी | खँदाल | रूपाखेती |
| तत्पुत्री | तत्पुत्र | तत्पुत्री | तत्पुत्र |
| अधिकारनी | विडारी | कुइँकयालनी | रूपाखेती |

## ५. झवाली

| | |
|---|---|
| नेपालनी | रिसालनी |
| तस्पुत्र | तत्पुत्र |
| नेपाल | रिसाल |
| तत्पुत्र | तत्पुत्र |
| नेपाल | रिसाल |
| तत्पुत्री | तत्पुत्र |
| नेपाल | नेपाल |
| सत्पुत्री | तत्पुत्र |
| प्याकुर्‍यालनी | पराजुली |
| तत्पुत्र | तत्पुत्र |
| प्याकुर्‍याल | पराजुली |
| तत्पुत्री | तत्पुत्र |
| प्याकुर्‍यालनी | पराजुली |

१ यहाँ रिजालनीको धनञ्जय र भुर्त्यालको कौण्डिन्य गोत्र हो तापनि रिजालनीका बाजे भुर्त्यालकी छोरी सिग्देललाई दिएको हुनाले आत्रेयगोत्रा आमाकी छोरी रिजाललाई दिएको हुनाले धनञ्जय गोत्र कन्याको हुँदा मातृकुलतिर बाधा परेन, पितृकुलतिर भुर्त्याल मात्र परेको हुनाले बाधा परी विवाह भएन ।

२ यहाँ सिञ्च अभि गोत्रको र ढकालनी उपमन्यु गोत्रवालीको छैठौं पुस्ता लेखन गोत्र बदला भई मातृद्वार खुलेको हुनाले र पितृतिर गोत्र बदलिएको हुनाले केही बाधा छैन, विवाह हुन्छ ।

३ केटी अधिकारिनीको भारद्वाज र केटो विडारीको कौशिक गोत्र हुनाले हुने थियो तर पितृपट्टि बज्यै विडारनीको एक गोत्र फाटेको हुँदा विवाह गर्न भएन ।

४ कुइँक्यालनीको मौद्गल्य र रूपाखेतीको वत्स गोत्र हुनाले र आठौं पुस्ता भई फिहद्वार खुलेको हुँदा मजासित विवाह गर्न हुन्छ।

५ सम्बन्धवार हुने तर प्याकुर्‍यालनीको र पराजुलीको पनि कौण्डिन्य गोत्र हुँदा सगोत्री भए। आमालाई पाले झैं पर्नुपर्छ। मोल गरी जन्मेका सन्तान चाण्डाल हुन्छन्।

## बिवाहमा रजस्वला निर्णय

बीहा पस्तिर बाबुका त घरमा कन्या नछुने भइन्।
बीहादेखि पला कि आफ्नि वरको आमा नछुने भइन्॥
बीहा गर्नु लसोरि कुम्भ दिन दिन् चार्दिन् र पाँच् दिन्महाँ।
गर्नु हुन्छ निहि तथापि यदिमा गर्नू त पाँच् दिनूमहाँ॥
शान्ति स्वस्ति गरेर हुन्छ भरनू आखीर्दि साहै हुँदा।
ब्याहाका अरु लग्न छैनन भने आमा नछुने हुँदा॥
शान्ती गर्नै नपरी गरे त दुलही हुन्छे विधवा भरे।
दुली आफ्नु खुसी गरे, जलसरी त्यो हुन्छ वर्तौंन् भरे॥
कन्या भोर र प्रवेश भो यदि भनो विवाहि पर्नेन् झलि।
आफ्नो पनि रजस्वला भइ हुसो वर्षे फाइ् नमानु रनि॥
आयाको कलशे त एक प्रतिमा शापिर भौहस्लाले।
कीको अर्नु पुजा चक्षार्थ लिखिले 'युञ्जानः' ले मन्त्रले॥
दिल्की होम र गाई दान गरन् दीन् अभीष्ट पनि।
पैहे दीर्घ कलश् गणेशजि पुजा गर्नू शुभो सो भनी॥
बीहा पस्तिर छोरि ता परसरी भन्देखि माता-पिता।
जेठो दाजुसमेत तिन् नरकमा जान्छन् अवश्यै पिता॥

प्रायश्चित्त नभै विहे गरिदिए आफ्ना त ज्वाइँ अनि।
हुन्छन् ती वृषलीपती र वृषली हुन्छे त छोरी पनि॥
प्रायश्चित्त म भन्छु शौनकजिले जो-जो कहेको यहाँ।
कन्याले पहिले कपाल फिंजि जो न्वाहेर बस्नू तहाँ॥

बाबूले जति पल्ट पुत्रि नछुने भै उत्ति ओटा गनी।
गोदानादि गरेर भूयसि गरी अन्नादि दानै पनि॥
एक् गोदान र दानहेरु अरुथोक् पूरेतलाई दिनू।
बाँकी जो वरलाइ१ दीनु खुस भै त्यो जो दुह्नाले लिनू॥

कन्याले पनि रातमा दुध पिई तिन् दिन् उपास्नू अनि।
कन्यालाइ त डाकि रत्न गहना दान् दीनु लूगा पनि॥
दूह्नाले पनि यज्ञमा घिउ मिसी कूष्माण्ड होम् गर्दिनू।
येती काम गरेपछी त दुलही दान् जो दुह्नाले लिनू॥

हुन्छे शुद्ध यती गरेपछि बुढी कन्या भए तापनि।
लेखें यत्ति नभै बिह्रा गरिदिए बिग्रन्छ तेस्को भनी॥
थर्देखी वरियाँत जन्ति गयको यज्ञ यतामा त यो।
कन्या२ ता नछुने भई यदि भने चार्दिन् बसी ली गयो॥

---

१ ब्राह्मणदेखि अन्य जाति वर भए प्रोहितले लिनू।

२ घरबाट जन्ती निस्की कन्याका घर गयो, त्यस वेला कन्या यसमै नछुने भई (परसरी) भने दुलहाले चार दिन डेरा गरेर बसी दुलहीलाई चार दिनका दिन सर्वाङ्ग स्नान गराएर पूर्वोक्त विधिसित बाबुले गोदानादि गरी फेरि कन्याले पनि गोदान गरी

यज्ञैमा नछुने भए त दुलही२ एघार अध्यायको ।
पैह्ला वेद ऋचा लि होम गरन् लाग्दैन दोष् पापको ॥
मैले यो सब धर्मशास्त्रहरुको सारांश लीई जहाँ ।
गोखलीहरुका निमित्त कहियो भन्छु म फेरी यहाँ ॥

विवाहे वितते यज्ञे संस्कारे च कृते तथा ।
रजस्वला भवेत् कन्या संस्कारस्तु कथं भवेत् ॥
स्नापयित्वा तदा कन्यामन्यैर्वस्त्रैरलंकृताम् ।
पुनर्मध्याहुतिं दत्वा शेषं कर्म समाचरेत् ॥

—आपस्तम्बस्मृति ७ अ०

विवाह कर्म आरम्भ गरेपछि केही संस्कार भई कन्या रजस्वला भई भने कन्यालाई नुहाउन लगाई वस्त्र पहिराएर गोदान गराई 'युञ्जानः प्रथमम्' भन्ने ऋचाले १०८ होम गराई बाँकी काम गर्नु, दोष लाग्दैन ।

## सुविवाहकन्यादानफल

ज्योतिष्टोमातिरात्राणां शतं शतगुणीकृतम् ।
प्राप्नोति पुरुषो दत्वा होममन्त्रैश्च संस्कृताम् ॥

---

विधिपूर्वक यज्ञ गरेर कन्यादान लिन-दिन हुन्छ । पाँच दिन गरे झन् बढिया हुन्छ र देवताका काममा अत्यन्त शुद्ध हुन्छे ।

२ यज्ञमा नछुने भई भने त विधिसाथ दुलहीलाई नुहाउन

तां दत्वा तु पिता कन्यां भूषणाच्छादनासनैः।
पूजयन् स्वर्गमाप्नोति नित्यमुत्सववृद्धिषु ॥

होमका मन्त्रले संस्कार भएकी कन्या दान गर्ने मानिस दस हजार ज्योतिष्टोम र अतिरात्र यज्ञ गरेको फल पाउँछ। जो मनुष्य उत्सव अथवा छोराको जन्म आदिका समय भूषण, वस्त्रादिले आफ्नी कन्याको सम्मान गर्दछ सो मरेपछि स्वर्ग जान्छ भनी संवर्तस्मृतिमा कहेको छ।

## विवाहमण्डपनिर्णय

वसिष्ठले कहेको विवाह गर्नेका हातको १६, १२, ८ विस्तार भएको ४ ढोल भएको पानी ओत्ने, माझमा ४ बाँस कदलीस्तम्भ ४ पैयूँका स्याहुलोदार ४ लिंगा उभ्याई चँदुआ टाँगनु, आगाले नमेट्टा-ओस्; पञ्चपल्लव तोरण, धागो बाँधी एक हात अग्लो चार हातको चारपाटे पार्नू। ईशानपट्टि एक हात अग्लो ग्रहको वेदी बनाउनू। ज्योतिर्विद् मनोहर भट्टको वचन छ कि चित्रा, विशाखा, शतभिषा, अश्विनी, ज्येष्ठा, भरणी, आर्द्रा, पुनर्वसु, तिष्य, अश्लेषा यी नक्षत्र छोडेर शेष नक्षत्रमा बनाउनू। विवाहको योग्य दिन हेरी शास्त्रोक्त विधिले चतुर्थी गर्नू। दुलहीका घर चतुर्थी गर्न निषेध छ। दुलहाकै घरमा गर्नुपर्छ; नत्र लगन गाँठो कसरी फुकाउनू? झारातिरा काम नगर्नू; यो वचन नारदजीको पनि छ।

## गोडधुवा विचार निर्णय

न सानू न ठूलो ठिकको पठुवा उसिना, श्राद्धमा भात पकाउन, ठूलो भोजमा भात पकाउन हुने पीतलको ताम्रो नयाँ मजबूत दिनाले हरवखत काम लाग्दछ। तामाको खँड्कुलोमा गोड़ा धुने पापी हो। कुहार चक्रा तामा-पत्र लिई वक्नुपर्दछ। अघि पशुपतिनाथका वरिपरि तामाको ढाटो बनाएको थियो, यो ठीक होइन भनी महाप्रभुबाट निकालेको हो। धर्म गर्दा पाप बोक्नु ठीक होइन।

## कन्यादान गर्दा विचार

पलङ शय्यामा राखी कन्यादान गरेको फल छैन, किनकि श्राद्ध गर्दा पनि 'प्राङ्गणे दीपं प्रज्वाल्य' भन्छ भनेको आँगन, चोटा, अन्तरिक्षमा होइन भन्ने अर्थ आउँछ; अतः अन्तरिक्षमा राखी कन्यादान कसरी दिने ?

## माईत घर बस्ने निर्णय

उद्वाहात् प्रथमे यदि वसेद् भर्तुर्गृहे कन्यका।
हन्यात् तज्जननीं क्षये निजतनुं ज्येष्ठे पतिज्येष्ठकम्॥
पौषे च श्वशुरं पतिं च मलिने चैत्रे स्वपित्रालये।
तिष्ठन्ती पितरं निहन्ति न भयं तेषामभावे भवेत्॥

कन्याको विवाह गरेको वर्ष असारमा पतिका घर दुलही बसे दुलहीकी सासू नाश हुन्छिन्। क्षयमासमा बसे आफै मर्छिन्। ज्येष्ठमा बसे जेठाज्यू नाश हुन्छन्। पूसमा बसे ससुरा नाश हुन्छन्। मलमासमा बसे पतिकै नाश हुन्छ। चैतमा माइत बसे पिताको नाश हुन्छ। यी छैनन् भने बस्न हुन्छ। पिता नहुनेले माइत बस्न हुन्छ। सासू, ससुरा, ज्येठाज्यू छैनन् भने कहेका महीनामा पतिका घर बस्न हुन्छ; नत्र कदापि हुँदैन। आषा हुनेले असारमा विदै गर्न हुँदैन। साउनमा पतिका घर मजासित बस्न हुन्छ, शास्त्रदोष छैन। साउने पानी छल्नू भनेको वृद्ध-वाक्य के हो भने यता-उता नजानू, खोला-नाला बढेका हुन्छन्। यो कुरा गर्दा चावहीलका गतौंला पण्डित ज्योतिषीले मनासीव हो भनी अघि भनेका हुन्। यहाँका ठूला-ठूला शास्त्रीहरू यसै गर्दछन्।

## दरको तिलहरी नत्थ निर्णय

आजकल मूर्खहरूले तिजका अघिल्ला दिन सम्धिनीलाई दरका साथ तिलहरी, नत्थ आदि दिने रीत चलाउन लागेका छन्। यो

साह्रै खराब हो; किनभने आफ्ना पतिले दिएको मात्र तिलहरी नत्थ लगाउनु उचित छ, पराईले दिएको तिलहरी नत्थ लगाउनाले जसको तिलहरी नत्थ छ, सो उसैकी हुने लक्षण आउँछ। विचार गर, सम्धी माने बराबर बुद्धि भएको भन्नाले वरको बाबु पनि सम्धी आमा पनि सम्धिनी बराबर भएपछि सम्धिनीमा जान्नु भनी मुख हेर्न, देखादेख गर्न हुँदैन भनी बुढा-पाकाले भनेको, चलाएको हो। अब साहत हेरी सम्धिनीको मुख रुपियाँ राखेर हेर्नाले दोष लाग्दैन भन्नु अनुचित हो। अतः कन्याका बाबा सम्धीले वरको आमा सम्धिनीलाई तिलहरी दिनाले बैना मारे जस्तो हुन्छ। सम्धिनीले दिएको होइन कि सम्धीले दिएको मानिन्छ। त्यस्तै जेठालाई छुन हुँदैन भनेको पनि हो। फेरि ज्वाइँले जेठी सासूको केश हेर्न छुन हुँदैन; फेरि मितले मितिनीलाई हेर्न हुँदैन भनी हेर्दैनन्, बिग्रन्छन् कि भनी नहेरेको हो। अतः दुलहाकी आमाले वरका साथ ल्याएका तिलहरी नत्थ लिन हुँदैन, यो लिनाले थिति बिग्रन्छ। फेरि दुनियाँ गरीब हुँदै आएका छन्, धेरै छोरी हुनेले कहाँ पाएर दिन्छ! तिलहरी नत्थ यो मुख्य विवाहको गहना सम्धिनीका निम्ति दिन हुँदैन। सम्धिनीलाई निजका दुलहाले विवाहमा दिएकै छ, फेरि दिनाले पुनर्विवाहको अंश देखिन्छ, छुन पनि हुँदैन।

## तेस्रो विवाह निषेध र अर्क विवाह

तेस्रो विवाहको निषेध मत्स्यपुराणमा कहेको छ—केवल भोग-विलासको कामनाले तेस्री स्त्रीका साथ विवाह कदापि गर्न हुँदैन। कारण मोह अथवा अज्ञानले जो व्यक्ति तेस्री स्त्रीसित विवाह गर्दछ सो अवश्य नष्ट हुन्छ। यो गर्गको वचन हो। संग्रहमा कहेको छ—

विधि यो हो—रवि अथवा शनिवार हस्ता नक्षत्रमा स्वस्तिवाचन तथा नान्दीमुख श्राद्ध गरी ब्राह्मण वरण गर्नू । अनि 'आकृष्णेन-रजसा' यस ऋचाले आँकका वृक्षमा छाया पारी सूर्यको पूजा गरेर गुड़ भात दान दिनू। वस्त्र धागोले वृक्षलाई बेरी यस मन्त्रले प्रार्थना गर्नू—

त्रिलोकवासिन् सप्ताश्व छायया सहितो रवे।
तृतीयोद्वाहजं दोषं निवारय सुखं कुरु॥

पछेर जलले तीनफेर सेचन गरी अनि फेरि हात जोड़ी पढ्नू—

मम प्रीतिकरा येयं माया सृष्टा पुरातनी।
अर्कजा ब्रह्मणा सृष्टा अस्माकं प्रतिरक्षतु॥
नमस्ते मङ्गले देवि! नमः सवितुरात्मने।
त्राहि मां कृपया देवि! पत्नी त्वं मे इहागता॥
वृक्षाणामादिभूतस्त्वं देवानां प्रीतिवर्धनः।
तृतीयोद्वाहजं पापं मृत्युं चाशु विनाशय॥

ततः आचार्यः काश्यपगोत्रामादित्यप्रपौत्रीं सवितुः पौत्रीं मम पुत्रीमर्ककन्याममुकगोत्राय वराय दास्ये इति वाग्दानं कृत्वा वरस्य मधुपर्कं कृत्वाऽन्तः पटं धृत्वा 'स्वस्तिनः' इति सूक्तं जप्त्वा मुर्गत् कन्या दत्वा अर्ककन्यामिमामित्यूहेन कन्यादानमन्त्रमुक्त्वा दक्षिणां दद्यात्। ततो गायत्र्यावेष्टितसूत्रेण बृहत्सामेति मन्त्रेण कङ्कणं बद्ध्वाऽर्कस्य चतुर्दिक्षु कुम्भेषु विष्णुं सम्पूज्याग्नि प्रतिष्ठाप्याघारान्ते संगोभिरिति बृहस्पतये, यस्मैत्वा कामकामायेत्यृचाऽग्नये व्यस्त समस्तव्याहृतिभिराज्यं हुत्वाचार्याय गोयुगं दत्वा—

इति नर्मदिलि दिक् इति निर्णयसिन्धो त्रिवाहः। यो पद्धति कम हुनाले यति नविग्रोस् भनेर लेखिदिएको हुँ। तृतीय विवाह गर्दा त्रै मनें दोष देखिएको हुनाले विधि राख्ने होस्।

## पादुका (खण्ड) कठपाउ धारण निर्णय

बाबा हुनेले र जेठो दाज्यू हुनेले कठपाउ लाउन हुँदैन। पादुकाको शब्द सुनेर सर्प, बिच्छी आदि भाग्ने हुनाले बाबा र जेठा दाज्यूसित हुन्छ भन्ने आज्ञा लिई लगाए हुन्छ। अग्निशाला, पाकशाला, गोशाला, देवता र ब्राह्मणका समीप, पूजा कोठा, देवालय र जपकालमा, वेदपाठका सामने, भोजन गर्दा पादुका लगाउन हुँदैन। जुत्ताको प्रतिनिधि पादुका हुनाले भान्सा आदिमा पादुका लगाई कदापि जान हुँदैन। कपड़ाका जुत्ता लगाएर पशुपति, गुह्येश्वरी आदि देवमन्दिरमा जान हुँदैन। जुत्ता भनेपछि कम दर्जा हुन्छ, खुट्टाका तलुआमा शुद्ध पसेपछि धोएर जाँदैन, कपड़ाका नयाँ धोएका जुत्ता भान्सामा लैजान हुन्छ भने देव-मन्दिरमा पनि हुन्छ, नत्र हुँदैन।

## काशीमाहात्म्य

अन्यत्र योगाभ्यसनाद् यावज्जन्म यदर्ज्यते।
वाराणस्यां तदेकेन प्राणायामेन लभ्यते॥
सर्वतीर्थावगाहाच्च यावज्जन्म यदर्ज्यते।
तदानन्दवने प्राप्य मणिकर्ण्येकमज्जनात्॥
सर्वलिङ्गार्चनात्पुण्यं यावज्जन्म यदर्ज्यते।
सकृद्विश्वेशमभ्यर्च्य श्रद्धया तदवाप्यते॥ का०खंड अ०६८

अन्यत्र जन्मभर योगाभ्यास गर्नाले जो फल पाइन्छ सो फल वाराणसीमा एकै प्राणायामबाट मिल्छ, यो आनन्दवन काशीको

अग्निकर्णिकामा केवल एक डुबकी लगाउनाले जो पुण्य हुन्छ सो पुण्य जन्मभर सब तीर्थहरूमा स्नान गरे पनि मिल्नसक्तैन तथा ऑंसुञ्जेल समस्त शिवलिङ्ग (रामेश्वरादि) को आराधनाले जुन पुण्य मिल्न कठिन छ सो पुण्य श्रद्धासाथ केवल एकैवार विश्वेश्वरको पूजनले शीघ्र मिल्दछ ।

अविमुक्तस्य माहात्म्यं षड्भिर्वक्त्रैः कथं मया ।
वक्तुं शक्यं न शक्नोति सहस्रास्योपि यत्परम् ॥का०खंडअ०२५

षडानन स्वामिकार्तिकेय भन्नुहुन्छ—जो अविमुक्त ( काशी ) को माहात्म्य सहस्र मुखका शेषजी हजार जिभ्राले पनि कहनसक्तैनन् त म छ मुखले कसरी कहनसक्छु, यो अकथ्य छ ।

## कलियुगको प्रायश्चित्त

नान्यत् पश्यामि जन्तूनां मुक्त्वा वाराणसीं पुरीम् ।
सर्वपापप्रशमनं प्रायश्चित्तं कलौ युगे ॥
ये विप्रास्तां पुरीं प्राप्य न मुञ्चन्ति कदाचन ।
विजित्य कलिजान् दोषान् यान्ति तत् परमं पदम् ॥

कलियुगमा वाराणसी ( काशी ) छोड़ी जीवहरूको सबै पापनाशक प्रायश्चित्त दोस्रो छैन । जो ब्राह्मण काशीमा आएर सधैं यहीं बसीरहन्छ, उ कलिज पाप जिती परमपद पाउनसक्तछ । यो स्कन्द पुराणमा लेखेको छ ।

काशीको माहात्म्य यजुर्वेद, जाबालोपनिषद्, रामतापिनी उपनिषद्, लिखित स्मृति, शङ्खीस्मृति, पाराशर स्मृति, महाभारत वन पर्व अ० ८, भीष्मपर्व अ० २४, कर्णपर्व अ० ५, अनुशासन पर्व अ० ३०, शिवपुराण, लिङ्गपुराण, स्कन्दपुराण, ब्रह्मवैवर्त, नारदीय पुराण, उत्तरखण्ड अ० २६, ४७, ४६, ५०, ५१, आदि, ब्रह्मपुराण

अ० ११, कूर्मपुराण, ब्राह्म संहिता अ० ३१ देखि ३५ सम्म, मत्स्य पुराण अ० १८० देखि १८५ सम्म, पद्मपुराण सृष्टिखण्ड अ० १४ तथा स्वर्गखण्ड अ० ३३ देखि ३७ सम्म, भूमिखण्ड अ० ६१, फेरि सृष्टिखण्ड अ० ११, वामनपुराण अ० ३, अग्निपुराण ११२, मार्कण्डेय पुराण अ० ८, वायुपुराण, सौरपुराण, भविष्यपुराण, शिवरहस्य, वाल्मिकीय रामायण, श्रीमद्भागवत, देवीभागवत, सनत्कुमार संहिता, त्रिस्थली सेतु, नैषध चरित्र, काशी रहस्य, काशीमाहात्म्य, काशीदर्पण, काशीप्रकाश, काशीस्थितिचन्द्रिका, काशीमुक्तिविवेक, काशीतत्त्वविवेक, काशीविवेक, काशी कुतूहल, गोस्वामी तुलसीदासकृत रामायण इत्यादि सनातनधर्मसम्बन्धी अनेक सद्ग्रन्थहरूमा तथा अन्य देशीय र अन्य धर्मावलम्बी निरपेक्ष विद्वान्हरूका मुखबाट पनि काशीको प्रशंसा बराबर पाइन्छ। काशीको जत्तिको प्रशंसा छ उत्तिको प्रशंसा अरुको हजार खण्डको एक खण्ड पनि छैन। गङ्गामाहात्म्य हेर्नुहोस्! आहा!!

दृष्ट्वा जन्मशतं पापं पित्वा जन्मशतद्वयम्।
स्नात्वा जन्मसहस्राणि हन्ति गङ्गा कलौ युगे॥
गण्डूषमात्रपानेन भवेद् गोदानजं फलम्।
स्वच्छन्दश्चेत् पिबेदापः तस्य मुक्तिः करे स्थिता॥
दासीहस्ते सुताशीर्षे खरपृष्ठे करात्करे।
तज्जलं तु सुरापानं न पेयं जाह्नवीं बिना॥
पीतशेषं पादशेषं शौचशेषं च यज्जलम्।
तज्जलं मदिरातुल्यं न पिबेज्जाह्नवीं बिना॥

—पाद्मे माण्डव्यवाक्यम्

हुन्छ। कुश्रा गर्दा खाइएको गङ्गाजलले गोदान गरेको फल मिल्छ। स्वच्छन्दसित गङ्गाजल पिउनेको मुक्ति त्यसका हातमा रहन्छ। दासी, चाकरका हातको, छोरीका शिरमा राखेको, गधाहाको पिठिउँमा राखेको, हात-हातैबाट पिएको जल मदिरा पिएकै समान हुन्छ, गङ्गाजललाई छोडेर !

अन्यतीर्थसमां गङ्गां यो ब्रवीति नराधमः।
स याति नरकं वैश्य ! दारुणं रौरवं महत् ॥ गङ्गापुराण

गङ्गा पनि अरु तीर्थकै समान हुन् भनी जो अधम मान्दछ ऊ रौरव नरकमा जान्छ। साढे तीन कोटि तीर्थहरूमा गङ्गाजी श्रेष्ठ हुनुहुन्छ, यो पक्का बात हो।

## कलिमा गङ्गामाहात्म्य

कृते सर्वाणि तीर्थानि त्रेतायां पुष्करं स्मृतम्।
द्वापरे तु कुरुक्षेत्रं कलौ गङ्गैव केवलम् ॥

सत्ययुगमा समुदाय तीर्थ, त्रेतामा पुष्कर, द्वापरमा कुरुक्षेत्र, कलियुगमा एक गङ्गामात्र तीर्थ सम्झनू। यो भविष्यपुराणमा लेखेको छ। सूर्यग्रहणमा काशी छोड़ी कुरुक्षेत्र जाने अज्ञानी हुन्। 'ग्रहणेषु काशी' जुनसुकै ग्रहण होस् काशी गङ्गा-स्नानकै महत्त्व छ। द्वापरमा कुरुक्षेत्र र कलिमा गङ्गा एकै समान हुन्।

## कलिमा छ थोकको सेवा

गीता गङ्गा तथा भिक्षुः कपिलाश्वत्थसेवनम्।
वासरं पद्मनाभस्य सप्तमं न कलौ युगे ॥

गीता, गङ्गा, भिक्षु, कपिला धेनु, अश्वत्थवृक्ष (पीपल), हरिवासर ( एकादशी ) छोडेर कलियुगमा सातौं पुण्यको काम हुँदैन। यो महाभारतमा छ।

कृते संभाष्य पतति त्रेतायां स्पर्शनेन तु।
द्वापरे त्वन्नमादाय कलौ पतति कर्मणा॥
त्यजेद्देशं कृतयुगे त्रेतायां ग्राममुत्सृजेत्।
द्वापरे कुलमेकं तु कर्त्तारं तु कलौ युगे॥

वृहन्नारदीयपुराणमा निम्नोक्त सकल काम कलियुगमा निषिद्ध छ—कमण्डलु धारण, असवर्ण कन्यासित विवाह, देवरबाट सन्तान उत्पादन, मधुपर्कमा पशुको वध, श्राद्धमा मांस-दान, लामो अवधिसम्म ब्रह्मचर्य, नरमेध, अश्वमेध, महाप्रस्थान गमन, गोमेध, यज्ञ, आततायी भएर रहँदा पनि ब्राह्मणको हिंसा, सुराग्रहण, अग्निहोत्रको हवनीमा पनि लेह-लीढाको ग्रहण (चाटचूट), वृत्त-स्वाध्याय सापेक्ष, आशौच संकोच ब्राह्मणलाई मरणान्त प्रायश्चित्तको विधान, संसर्गको दोष लाग्दा पनि चोरी आदि दोषहरूमा मुक्ति-लाभ, दत्तक तथा औरसलाई छाडेर अन्य पुत्रको ग्रहण, गुरु एवं स्त्रीको परित्याग, दोस्राका निमित्त आत्मत्याग, उच्छिष्टवर्जन, दास गोपाल आदिका अन्नको भोजन, गृहस्थका निमित्त अति दूरका तीर्थको सेवा, गुरुस्त्रीमा शिष्यको गुरुवत् वृत्ति, द्विजातिहरूको आद्वृत्ति, अश्वस्तनिकता, ब्राह्मणको प्रवास, मुखले अग्निको धमन (आगो सल्काउनु), बलात्कारादि दोष, दुष्ट स्त्रीको ग्रहण, सबै जातिबाट यतिले भिक्षा ग्रहण, ब्राह्मणादिका निमित्त शूद्रादिको पाक, पर्वतका उच्च स्थानबाट गिर्नु अथवा अग्निमा परी प्राण त्याग्नु प्रभृति कलियुगमा हुँदैनन्।

## उल्लास तन्त्रमा कलियुगको लक्षण

कलियुगमा वैदिकी र पौराणिकी शिक्षा, पाप-पुण्यको विवेक लोप हुन्छ, स्थान स्थानमा गङ्गा छिन्न-भिन्न देखिन्छिन्। स्त्रीहरू अतिशय दुर्दान्त कर्कशा कलहरत पतिनिन्दक निक्लन्छन्। पृथ्वी

अल्प शस्य उत्पादन गर्छिन्, मेघ अधिक बर्सदैन, वृक्षहरूमा स्वल्प फल हुन्छ; भ्राता, आत्मीय, अमात्य प्रभृति सामान्य धन मात्रका निम्ति लड्नेछन्। रक्सी र मासु कोही पनि छोड्नेछैनन्। सबको निन्दा हुनेछ। पापीलाई दण्ड मिल्नेछैन। माघी पूर्णिमा शुक्रवार कलियुगको उत्पत्ति हुन्छ। यसको आयु चार लाख बत्तीस हजार ४३२००० वर्ष छ। आर्यभटका मतमा कलियुग १५७७९१७५० दिन रहन्छ।

## भागवतमा कलियुग लक्षण

कलियुगमा मनुष्यहरूको ५० वर्ष परम आयु हुनेछ। कलिका दोषबाट देहीहरूको देह क्षीण हुनेछ। वर्णाश्रमाचारहरूको धर्मपथ बिग्रनेछ। धार्मिक पाखण्डी जस्ता बन्दछन्। मनुष्यहरू चोरी, झुट्टा, वृथा हिंसा आदि नाना वृत्ति पक्रनेछन्। ब्राह्मणादि तीन जात शूद्र जस्ता हुनेछन्। गो छागजस्ता रहनेछन्। मेघ बिजुली प्रायः देखिनेछन्। औषधिहरूको गुण घट्नेछ, पहाड़ तलतिर झुक्नेछ, गृह शून्यप्राय धर्मरहित बन्नेछ, लोक दुःसह चेष्टित देखिनेछन्। फेरि धर्मको त्राणका निम्ति सत्वगुणबाट भगवान् कल्कि अवतार लिनेछन्। परीक्षितको जन्मदेखि महानन्दको राज्याभिषेकसम्म ११५० वर्ष बित्नेछ। सप्तनक्षत्रात्मक सप्तर्षिमण्डलका मध्य उदयका समयमा दुई नक्षत्ररूप ऋषि आकाशमा प्रथम उदित हुँदै देखिन्छन्; ती दुवैका बीच समदेशमा अवस्थित अश्विनी आदि नक्षत्र रातमा रहन्छन्। तिनमा एकाएकबाट मिलेर सप्तर्षि मनुष्य परिमाणका सय सय वर्ष अवस्थिति गर्नेछन्। ती सकल ऋषि परीक्षितका समय मघालाई एकीरहनेछन्। सप्तर्षिमण्डल मघा नक्षत्रमा घुम्नाले कलिको प्रवृत्तिका १२०० साल बित्नेछ। फेरि सन्ध्या अतिक्रान्त हुनेछ। जुन समयमा सप्तर्षिमण्डल मघा छाडेर पूर्वाषाढातिर हिड्नेछन् उस वखत अर्थात् नन्दाभिषेकसम्म कलि अतिशय

बढ्नेछ । श्रीकृष्ण वैकुण्ठ पाल्नुभएकै दिनदेखि कलि लाग्दछ । दिव्य परिमाणले सहस्र वर्षपछि चौथो कलि बिती फेरि सत्ययुग आरम्भ हुन्छ । भागवत द्वादशस्कन्ध २ अ० १९-२६ श्लोक ।

## यज्ञोपवीत निर्णय

मनुजीको वचन छ कि ब्राह्मणको जनै कपासको फेरि उपरको तीन तारको हुनुपर्दछ। पारिजातमा देवलको वाक्य छ कि कपास, अतसी, पाट ( सन ) गोपालशण, बाबियोको जनै मौकामा जस्तो पाइन्छ ब्राह्मण, क्षत्रिय र वैश्य यी तीन जातले धारण गर्नू । पवित्र स्थानमा पवित्र धागाको मिलेका औंलाहरूको फेदबाद छियानब्बे ९६ फेर गनी बेरी छिनाली यसैको तिगुना पारेर जलको नाम आउने 'आपोहिष्ठा' वा 'शन्नोदेवी' भन्ने ऋचाले तीन फेर धोएर तिगुना पारी सङ्लेका धागालाई अप्रदक्षिणा क्रमले माने बायाँतिरबाट अर्थात् उल्टो बाटेर तिगुना पारी प्रदक्षिणावर्तन गरी अर्थात् सुल्टो बाट्नाले मिलेका नौ डोरा हुन्छन् । फेरि तीन बार घुमाई दृढ (पक्का) गाँठो पारी शिखा पारेर ब्रह्मा, विष्णु, शिवको नमस्कार गर्नू । यज्ञोपवीतको भवतन्तु गरी गायत्रीले तिगुना गरेर नौ सूत्र हुन्छन् । यसो गर्नाले कटिसम्म या नाभिसम्म लामा शास्त्रोक्त जनै बन्दछन् । पाँच बित्ता अथवा पाँच कुरेत नापी किला ठोकेर सङ्लेका जनै अशुद्ध हुन्छन्--भृगुको उक्ति पनि यस्तै छ । छान्दोग्यपरिशिष्टमा लेखेको छ कि तीन तन्तु उपर बाटेर फेरि उसलाई उल्टो बाटेर तिगुना पारी एक इष्ट ग्रन्थि दिनाले यज्ञोपवीत बन्दछ । दक्षिण हात उँधो पारेर बाटे 'ऊर्ध्ववृत्त' भन्दछन् ।

ॐकारः प्रथमे तन्तौ द्वितीयेऽग्निस्तथैव च ।<br>
तृतीये नागदैवत्यं चतुर्थे सोमदेवता ॥<br>
पञ्चमे पितृदैवत्यं षष्ठे चैव प्रजापतिः ॥<br>
सप्तमे मारुतश्चैव अष्टमे सूर्य एव च ॥

सर्वे देवास्तु नवमे इत्येतास्तन्तुदेवता ।
ब्रह्मणोत्पादितं सूत्रं विष्णुना त्रिगुणीकृतम् ॥
रुद्रेण दत्तो ग्रन्थिर्वै सावित्र्या चाभिमन्त्रितम् ।
कृते पद्ममयं सूत्रं त्रेतायां कनकोद्भवम् ॥
द्वापरे राजतं प्रोक्तं कलौ कार्पाससम्भवम् ॥

–हरिहरभाष्ये

नौ डोराका नौ देवताको नाम–ॐकार, अग्नि, नाग, सोम, पितृ, प्रजापति, वायु, सूर्य र सम्पूर्ण देवता। ब्रह्माले सूत्र पैदा गरे, विष्णुले तिगुना गरे, शिवजीले गाँठो पारे, सावित्रीले मन्तरीन् । सत्ययुगमा कमल नालको, त्रेतामा सुनका तारको, द्वापरमा चाँदी-का तारको र कलियुगमा कपासको जनै लगाउनू ।

कात्यायन– पृष्ठवंशे च नाभ्यां च धृतं तद्विन्दते कटिम् ।
तद्धार्यमुपवीतं स्यान्नातिलम्बं न चोच्छ्रितम् ॥

पिठिउँवाट नाभिसम्म लामो धारण गरे कमरसम्म हुन्छ। यस्तो जनै लगाउनू । अत्यन्त लामो र अत्यन्त छोटो गर्न हुँदैन ।

वसिष्ठः– नाभेरूर्ध्वमनायुष्यमधो नाभेस्तपः क्षयः ।
तस्मान्नाभिसमं कुर्यादुपवीतं विचक्षणः ॥

नाभिमाथि यज्ञोपवीत भए आयु हानि हुन्छ । नाभिभन्दा जनै तल पुगे तपको क्षय हुन्छ । अतएव चतुर मनुष्यले नाभिका बराबर यज्ञोपवीत धारण गर्दछन् ।

स्मृत्यन्तरे– कण्ठादि नाभिपर्यन्तं यज्ञसूत्रं पवित्रकम् ।
न्यूने रोगप्रवृत्तिः स्यादधिके धर्मनाशनम् ॥

घाँटीदेखि नाभिसम्म लामो जनै पवित्र हुन्छ, नाभिदेखि कम

(छोटो) हुनाले आयु घटाउँछ, रोग लाग्दछ। नाभिमन्दा लामो जनैले धर्म नाश गर्दछ; अतः नाभिसम्म लामो जनै लगाउनाले तपस्या र आयु बढ्दछ। तिघ्रासम्म लामो जनै लगाउनाले सत्य-नाश हुन्छ।

जनै जलमा भिजाई १० फेर गायत्रीले मन्त्री दुई हातले ठीक पारी यो मन्त्र पढ्नू—

जनै फेर्ने मन्त्र– यज्ञोपवीतमिति मन्त्रस्य परमेष्ठी ऋषिः लिङ्गोक्ता देवता त्रिष्टुप्छन्दः यज्ञोपवीतधारणे विनियोगः।

ॐ यज्ञोपवीतं परमं पवित्रं प्रजापतेर्यत्सहजं पुरस्तात्।
आयुष्यमग्र्यं प्रतिमुञ्च शुभ्रं यज्ञोपवीतं बलमस्तु तेजः॥

हे आचार्य! इदं ब्रह्मसूत्रं=यो ब्रह्मसूत्रकन, अहं=म, प्रतिमुञ्च=बाँधछु, यो ब्रह्मसूत्र कस्तो छ भने यज्ञेन=प्रजापतिले, यज्ञाय=यज्ञका निम्ति अथवा वेदोक्तकर्माधिकारका निम्ति उपवीतं=काँधमा राखिएको, परमं=पर भनेको आत्मा भीयते ज्ञायते तेन=त्यस कारणले वाक्योपदेशमा अधिकार हुनाले, पवित्रं=शुद्ध गराउने, प्रजापतेः=ब्रह्माको, सहजं=सँगै उत्पन्न भएको अर्थात् स्वभाव सिद्ध भएको, पुरस्तात्=पहिले भएको, अतः=यसकारणले इदं=यो जग, आयुष्यं=आयुष्य र हित दिने, अस्तु=होस्, अग्र्यं=मुख्य छ, अनुपहतं=अर्काले नलगाएको, शुभ्रं=निर्मल भएको, बलं=बल-सामर्थ्य दिने, प्रभाव दिने जनैको माहात्म्य छ। पुराना जनै निकाल्ने निर्णय र मन्त्र–

कण्ठः काण्वाश्च चरका विप्रा वाजसनेयकाः।
बह्वृचाः सामगाश्चैव ये चान्ये यजुशाखिनः।
कण्ठादुत्तार्य सूत्रं तु पुनः संस्कारमर्हति॥

हामी यजुर्वेदीहरूले तलबाट जनै फिक्नुपर्दछ। माथि शिरबाट फिक्यो भने फेरि व्रतबन्ध गर्नुपर्दछ।

एतावद्दिनपर्यन्तं ब्रह्मत्वं धारितं मया।
जीर्णत्वात्त्वत्परित्यागो गच्छ सूत्र यथासुखम्॥

हे जनै! यतिका दिनसम्म मैले धारण गर्नें, अब तिमी बुढो भएकाले म त्याग्छु, आऊ सुखी होऊ।–यो मन्त्र पढी जनै फिक्नू।

सूतके मृतके चैव गते मासे चतुष्टये।
नवयज्ञोपवीतानि धृत्वा जीर्णानि सन्त्यजेत्॥

मरेमा, जन्मेमा र चार महीना पुगेपछि नयाँ जनै फेरेर पुरानो त्याग्नुपर्छ।

—: ० :—